# दुमाजुदेवी-भक्तपुर

**प्रस्तोता: पुरूषोत्तमलोचन श्रेष्ठ**

*प्रस्तुत अध्ययन प्रतिवेदन जनसंख्या तथा वातावरण मन्त्रालयको सहयोगमा*

## विषय प्रवेश

पुरातत्त्वका दृष्टिले पूर्व प्राचीनकालतिरै नेपाल-उपत्यकामा मातृमत (शाक्त सम्प्रदाय) प्रचलित भइसकेको ज्ञात हुन्छ । उपत्यकाका अनेक स्थानमा प्राप्त ईसाको प्रथम शताब्दीदेखिका मातृदेवीका मूर्ति यस कुराको पुष्टिका लागि उदाहरणस्वरूप छन् ।[1] मातृदेवीको पूजा उपासना उत्तर प्राचीनकालतिर पनि चलिरहेको कुरा अभिलेखिक प्रमाणका अतिरीक्त यसै कालतिरका मातृदेवीका मूर्तिका आधारमा पनि जान्न सकिन्छ । तथापि यसकालतिर मातृदेवीका तुलनामा पुरूपदेवता चाहिँ राजकीयस्तरमै विशेप लोकप्रीय रह्यो । स्वतन्त्र रूपले चलेका अनेक धार्मिक सम्प्रदायहरूमा विशेपगरी ईशाको सातौं शताब्दीदेखि तन्त्र सिद्धान्तले प्रभाव पार्दै लान थालेपछि अपरिहार्य रूपले मातृदेवीको महत्त्व एवं तिनका अनेक तान्त्रिक स्वरूप पनि वढ्दै जानथालेको दृप्टिगोचर हुन्छ ।[2] उत्तर प्राचीनकालमा केन्द्रीय शासन राजनैतिक प्रशासनिक दृप्टिले निकै मजबूत रह्यो । तर पूर्व मध्यकालमा आईपुग्दा अस्थिरता आक्रमण प्रत्याक्रमण, प्राकृतिक प्रकोप जस्ता घटनाहरूले बराबर शासक एवं जनताहरूलाई आक्रान्त पार्न थालेपछि पहिलेका सामान्य पुरुपदेवताका तुलनामा उग्र तान्त्रिक स्वरुपका मातृदेवीको पूजा उपासना सुरक्षाका दृप्टिले अत्यन्त लोकप्रीय भएर आयो । मध्यकालको पूरै लौकिक जीवनलाई तन्त्रप्रधान शाक्त धर्म-संस्कृतिले प्रभावित पाऱ्यो, पुरूपदेवता शक्तिका सहायकका रूपमा मात्र देखा पर्न थाले, स्वेष्टदेवता/ईप्टदेवताका रूपमा राजकीय महत्त्व पाउँदै अनेक नाम र स्वरूपमा मातृदेवीको महत्त्व बढ्यो । मानेश्वरी, दुमाजु र तलेजु यस कुराको पुष्टिका लागि उदाहरणस्वरूप छन् ।

## दुमाजुदेवीको आगमन एवं प्रतिष्ठाकाल

पूर्व मध्यकालका राजा आनन्ददेव (वि.सं १२०४) को पालादेखि यक्षमल्लको समयसम्म तीन शताब्दी भन्दा पनि केही बढी समयसम्म नेपालमण्डलको राजधानी नगरको रूपमा भक्तपुर रहँदा राजनैतिक प्रशासनिक दृप्टिले मात्र नभएर धार्मिक सांस्कृतिक दृप्टिले शाक्त तान्त्रिक धर्मको प्रचार-प्रसारको प्रवाह पनि यसै युगमा चलेको थियो । यसो हुँदा भक्तपुर राजदरबार शाक्त कौल मतको मूल थलोकै रूपमा समेत विकसित हुन पुग्यो, दरबार राजकीय बासस्थानको रूपमा मात्र नभएर अनेक समयमा प्रतिष्ठापित उच्चतम शाक्त तान्त्रिक देवदेवीका कारण देवस्थलकै रूपमा समेत देखापऱ्यो । मल्ल राजाहरूले स्वेप्टदेवता/ईप्टदेवताका रूपमा मान्दै आएका उपर्युक्त आगमदेवताहरू यस कुराको पुष्टिका लागि उदाहरणस्वरूप छन् ।

भक्तपुर राजदरबारस्थित मानेश्वरी, दुमाजु र तलेजु एकै समयमा नभएर अनेक कालमा प्रतिष्ठापित भएका हुन् भन्ने कुरा यस विपयका प्रमाणहरूले देखाएको छ । मानेश्वरी (हाँडिगाँउ) उत्तर प्राचीनकालतिरै प्रसिद्ध देवी थिइन् । मध्यकालमा मातृमतको लोकप्रीयता बढेपछि भक्तपुर राजदरवारमा तिनकै तान्त्रिक-प्रतिरूप प्रतिष्ठा हुनपुगेको देखिन्छ । अनि पशुपतिसंगै मानेश्वरी पनि राष्ट्रिय एवं राजकीय देवीकै रूपमा पुजिन पुगिन् । मल्ल राजाहरूले धारण गरेका राजप्रशस्तिमा मानेश्वरीको उल्लेखवाट पनि यस कुराको प्रामाणिक पुष्टि मिल्छ ।

भक्तपुर राजदरबारस्थित मानेश्वरी, दुमाजु र तलेजुले विक्रमको पन्ध्रौं शताब्दीको मध्यसम्ममा आईपुग्दा राजकीय एवं राष्ट्रियस्तरमै प्रसिद्धि पाईसकेको दृष्टिगोचर हुन्छ ।[३]

उत्तर-पूर्वी भारतमा मुसलमानहरूको मारबाट बच्न नेपालमा शरणार्थीका रूपमा प्रवेश गरी विक्रमको बाह्रौं शताब्दीको मध्यतिर (वि.सं. ११५४) सिम्रौनगढलाई राजधानी तुल्याई स्वतन्त्र राज्य खडा गर्ने कर्णाटवंशी नान्यदेव र उनका वंशजहरू नेपाल उपत्यकामा डोय नामले प्रसिद्ध थिए ।[४] केन्द्रीय राज्य (नेपाल उपत्यका) को तुलनामा अनेक दृष्टिले विकसित एवं बलियो हुँदै गएको डोय राज्यका शासकहरूले हिन्दूधर्मको पुनरूत्थान गर्दै लाने प्रयास पनि गरे ।[५] फलस्वरूप शाक्त मतका प्रवल उपासक डोयहरूले आफ्नो नयाँ राज्य खडा भएको केही समयपछि नै नेपाल उपत्यकामा बराबर आक्रमण गर्दै[६] यहाँको राजकाजमा मात्र नभएर धार्मिक-सांस्कृतिक जीवनमा समेत केही कालसम्म गहिरो प्रभाव जमाउन र भित्र्याउन सफल भएका थिए । उदाहरणका लागि सोही प्रभाव-युगतिर नेपाल उपत्यकामा भित्रिएको डोय-संस्कृतिको एक पक्ष दुमाजु-संस्कृतिलाई पनि लिन सकिन्छ ।

शाक्त कौल तन्त्रको कुब्जिका मत अन्तर्गतका काली, गुह्यश्वरी, भैरवी, त्रिपुरासुन्दरी, सिद्धिलक्ष्मी, तलेजु, भगवती, दुर्गा आदि अनेक उच्चतम् तान्त्रिक स्वरूपका देवीहरूको समूहमा[७] पर्ने एक देवी दुमाजु पनि हुन् । मूर्तिकला वा प्रतिमालक्षणका दृष्टिले देखापर्ने आकृति गुप्त पारिएको तिनको बाह्याभ्यन्तर स्वरूप (चित्र संख्या १,२) इष्टदेवता वा कुलदेवताका रूपमा अहिले पनि पुजिएकै छ । दुमाजु-पूजापद्धति ग्रन्थमा तिनलाई कुब्जिका पनि भनिएको छ ।[८]



चित्र संख्या १ : लिङ्गाकृति झैं देखिने दुमाजुदेवीको अनाकृति प्रस्तर-प्रतिमा, स्थान : दुमाजुचोक, भक्तपुर राजदरबार

चित्र साभार : सूर्यप्रसाद श्रेष्ठ, पुरातत्त्व विभाग

*प्रस्तुत चित्रमा अलिकता ध्यान दिएर हेरेको खण्डमा दुमाजुदेवीको लिङ्गाकृत प्रतिमाको पार्श्वभागमा एउटा सानो जलकुण्ड पनि देखापर्छ । सो जलकुण्डलाई गुह्यश्वरी गःचा भनिन्छ । यसरी ती लिङ्गाकृत प्रतिमा र जलकुण्डले शक्तिको प्राधान्यता रहेको दुमाजुदेवीको शिवशक्तिमय स्वरुप दर्शनीय हुन आउँछ । मेषसंक्रान्तिमा दुमाजुदेवीको पूजाकर्म सकिएपछि लिईएको यस चित्रमा तिनको दायाँ-बायाँ पूजाकर्मका क्रममा चढाईएका भातका एकजोडी गोजा बोको भुँडी आदि लगायतका पूजाका अवशिष्ट भाग देखापर्छन् ।*



*चित्र संख्या २*

*अनेक कालका विभिन्न शासकहरुद्वारा चढाईएका द्वार-तोरणसहितको सिंहासनमा वस्त्र, आभूषण तथा पूजासामग्रीले मेषसंक्रान्तिमा हुने पूजा जात्राका निमित्त सजिईएकी दुमाजुदेवीको फुसे सिन्दूरले पुरै पोतिएको अनाकृति प्रतिमा । प्रस्तुत चित्रमा तिनको बायाँपट्टि यक्षमल्लले चढाएको जलपात्र, कान्तिपुरका राजा नरेन्द्रमल्लले चढाएको कानमा लगाईने एकजोडी तरीका, रणजित मल्लले चढाएका सिन्हम्हू ज्वला न्हायकं, पात्र आदि देखापर्छन ।*

*चित्र साभार : सूर्यप्रसाद श्रेष्ठ, पुरातत्त्व विभाग*

शाक्त कौल तन्त्रका परम अनुयायी डोय राजा नान्यदेव र उनका वंशजहरू विशेषगरी कुब्जिका/ कालीका उपासक थिए भन्ने कुराको सांकेतिक प्रमाण सिम्रौनगढभेकका कंकालीमाई, गढीमाई, सिंहवाहिनी, महीपमर्दिनी देवीका मूर्ति/देवस्थल आदिले पनि दिएका छन् ।

पूर्व मध्यकालतिर युथुनिमम् नामले प्रसिद्ध रहेको भक्तपुर राजदरबारको[९] मूलचोकदेखि उत्तर-पश्चिममा अवस्थित पोखरीसहितको चोकमा स्थापित अनाकृत प्रस्तर-लिङ्गाकृति ( चित्र संख्या २) अहिलेको लौकिक जीवनमा पनि दुमाजु नामले उत्तिकै मान्य पूज्य छिन् । लौकिक जीवनसितको यिनको सांस्कृतिक सान्निध्यता पनि जीवन्त नै छ ।

अहिलेको लौकिक जीवनमा चलेको दुमाजु/डुइँमाजु/द्विमाजुको पूर्व रूप डोयिनी/डुयिनी हो । हालसम्म प्रकाशमा आएका अभिलेखिक प्रमाणले यसको सर्वप्राचीन उल्लेख गोपाल राज वंशावलीमा ने.सं. ३८१ (ई.सं. १२६१) र ने.सं. ४७० (ई.सं. १३४९) का घटना वर्णनका प्रसङ्गमा[10] र ने.सं. ६०२ को दुमाजुदेवीको जलपात्रको अभिलेखमा देखिन आएका छन् ।[11] परवर्तीकालका वंशावलीमा दुमाजुदेवीलाई राजा नान्यदेवले भित्र्याएको कुरा परेको छ ।[12]

यसप्रकार माथिका प्रसङ्गबाट निम्नलिखित कुरा दृष्टिगोचर हुन्छन् - नेपाल उपत्यकामा आफ्नो प्रभुत्व जमेको समयताका डोयहरूले आफूले मान्दै आएका इष्टदेवता (कुब्जिका/काली) कै एक प्रतिरूप उनीहरूले यहाँ पनि शाक्त कौलमतको प्रचारका अभिप्रायले सर्वप्रथम भक्तपुर राजदरबार (युथुनिमम्) मा भित्र्याएका थिए । अनि यसरी डोयहरूले मान्ने इष्टदेवता भएका कारण यी देवी यहाँको जनजीवनमा डोयिनीमाम/डुयिनी मातृका/डुइँमाजु/ दुमाजु नामले प्रसिद्ध रहँदै आयो ।[13] डोय राज्यका अन्तिम राजा हरिसिंहदेवकी रानी देवलदेवीले आफ्ना दाज्यू रूद्रमल्लको युथुनिमम् राजकुलमा मूल-तलेजुसहित प्रवेश पाई यहाँको राजकाजमा हात हालेपछि तलेजु संगसंगै दुमाजुदेवीको महत्व पनि पहिलेको भन्दा बढ्न गयो र तिनैले ल्याएका स्थितिमल्लको समयदेखिका सारा मल्ल राजाहरूले तलेजुलाई मात्र नभएर दुमाजुलाई पनि इष्टदेवता (कुलदेवता) कै रूपमा औपचारिक ढङ्गले मान्न पुज्न थाले । अनि तिनकै साथमा वा सम्भवत: त्यसभन्दा अघि नै यहाँ (नेपाल उपत्यकामा डोयहरूको प्रभुत्व जमेको समयताका) प्रवेश गरेका एकथरी पुरोहित वर्ग - ब्राह्मण, जोशी र त्यसैगरी तलेजुका रकमी-चोकाभडेल, तलेजुसितै सम्बद्ध ज्यापू वर्गका चौगुठी, मूगुठीहरूका पनि कुलदेवताका रूपमा यिनी देखा परिन् र तान्त्रिक पुजारीका रूपमा चाहिँ कर्माचार्य देखा परे । त्यसैगरी मल्लहरूका राजपुरोहितका रूपमा मात्र नभएर राजदरबारका दुमाजु लगायतका उच्चतम देवदेवीका पुजारीका रूपमा समेत उनीहरू ब्राह्मण (राजोपाध्याय), जोशी र कर्माचार्य नै देखा परे ।[14]

गोपालराजवंशावलीको ३६ पत्रमा दुमाजुदेवीलाई “डोयिनीमाम नाम देवी” भनिएको छ । यो कुरा विचारणीय छ । तिनलाई सिधै डोयिनीमाम (दुमाजु) मात्र नभएर “नाम देवी” (नामकी देवी) पनि भनिएकोले तात्कालीन धार्मिक जीवनमा तिनी भरखरै मात्र प्रचारमा आउन थालेकी नवोदित देवी रहिछिन् भन्ने आभास मिल्छ । गोपालराजवंशावलीमा तलेजुको उल्लेख कतै पनि नआएको आधारमा भक्तपुर राजदरबारमा दुमाजुदेवीको प्रतिष्ठा तलेजुको आगमनभन्दा अघि नै भएको थियो भन्ने कुरा बुझिन्छ । परवर्तीकालकै भएता पनि भाषा वंशावलीमा नान्यदेवले दुमाजु ल्याएको उल्लेखले पनि उपर्युक्त कुरा बुझ्ने केही आधार मिलेकै छ । यताबाट तत्कालीन नेपाल उपत्यकामा दुमाजुदेवीको आगमन वा युथुनिमम् राजकूल (भक्तपुर राजदरबार) मा दुमाजुदेवीको प्रतिष्ठाकाल ईशाको तेह्रौं शताब्दीको पूर्वार्द्धतिरको निर्धारण गर्न सकिन्छ । तन्त्रप्रधान नेवार धार्मिकजीवनमा दुमाजु-संस्कृतिको मौलिक विकासक्रम पनि सोही समयलाई मान्न सकिन्छ ।

## दुमाजुदेवी र शासकवर्ग

मूल तान्त्रिक स्वरूप, पूजापद्धति एवं सांस्कृतिक विधान आदि राजदरवारका अन्य देवीका भन्दा पृथक भएतापनि राजकीय सम्मानका दृष्टिले चाहिँ तलेजु सदृश इष्टदेवताकै रूपमा दुमाजुदेवीलाई मल्ल शासकहरूले व्यक्तिगत, लौकिक एवं राष्ट्रिय हित र सुरक्षा र समृद्धि सुस्वास्थ्य, राज्यविस्तार आदिको कामना गर्दै, जग्गा गुठी राखी अनेक प्रकारका पूजासामग्री, गरगहना चढाउँदै, अनेक तान्त्रिक पूजाविधान राखेर, जात्रा चलाएर भक्ति एवं सम्मान प्रकट गर्दै दुमाजु-संस्कृतिलाई यिनको मूल थलो भक्तपुरमा मात्र नभएर कान्तिपुर र ललितपुरमा समेत विस्तार गर्दै लगेको देखिन्छ ।[15]

भक्तपुर राजदरबारमा हालसम्म फेला परेका अभिलेखमध्ये माथि चर्चा गरिएको ने.सं. ६०२ को दुमाजुदेवीको जलपात्रको अभिलेख नै सर्वप्राचीन देखिन आएको छ । चाँदीको सो जलपात्र

यक्षमल्लका ज्वाइँ हर्षमल्लदेवले दुमाजुदेवीको नित्य कर्मर्चन पूजा (था पूजा) का निमित्त चढाएका थिए, साथै रत्नादेवीको प्रतिमा पनि चढाएका थिए, सो चढाएको फलले आयुरारोग्य पुत्र पौत्र राज्यलक्ष्मी वृद्धि होस् भन्ने कामना पनि गरिएको रहेछ भन्ने कुरा त्यस जलपात्रमुन्तिरको गोलाकार पाटोमा कुँदिएको सो अभिलेखका साथै सोही जलपात्रको माथिल्लो घेरामा कुँदिएको अर्को अभिलेखबाट ज्ञात हुन्छ ।[16]

विस्केट जात्राताका दुमाजुदेवीको लिङ्गाकृति भैँ लाग्ने, फुस्रे सिन्दूर लगाइएको अर्द्धवृत्ताकार अनाकृत-प्रतिमालाई पूजासामग्रीसहितले युक्त गरी, अनेक प्रकारका वस्त्र आभूषणले सिङ्गारी द्वार-तोरणसहितको सिंहासन (विमानखट)मा राखी (चित्र संख्या २) आगमगृहबाट तल जहुँचोकमा ल्याएर राख्ने चलन छ । यसरी प्रत्येक वर्ष तिनलाई सजाईने तिनका तह-तह गरी तलदेखि माथि क्रमशः सानो आकारका चार तहमा मिलाएर सिङ्गारिएका बाटुला बहुमूल्य आभूषणलाई तरिका (चित्र संख्या २) भनिन्छ ।[17] तीमध्ये तेश्रो तहका एकजोडी तरीका तत्कालीन कान्तिपुर राज्यका राजा नरेन्द्रमल्लले ने.सं. ६६३ र ने.सं. ६७९ मा चढाएका रहेछन् भन्ने कुरा ती तरीकाका पृष्ठभागमा उत्कीर्ण अभिलेखबाट थाहा हुन्छ ।[18]

दुमाजुदेवीको तान्त्रिक पूजा प्रयोजनका निमित्त राजा भूपतीन्द्र मल्लले चार अंगुल चौडा, चार अंगुल लम्बा र कान्छी औंलाले एक अंगुला मोटो एउटा चारपाटे कालो चिप्लो ढुङ्गे-पात्र बनाउन लगाएका थिए । यो कुरा त्यही ढुङ्गे-पात्रमा उत्कीर्ण अभिलेखबाट थाहा पाइन्छ ।[19]

राजा रणजितमल्लले पनि दुमाजुदेवीको पूजा प्रयोजनका लागि अनेक समयमा वस्त्र सहित चाँदीका त्रिखुटी, सिन्हम्हू ज्वला न्हायकं, एकजोडी कलात्मक पात्र, चारै कुनामा उड्न लागेका सिंहसहितको-आसन, सुवर्णवृक्ष तोरण आदि राखिदिएका थिए । यो कुरा ती पूजासामग्री, सिंहासन आदिमा उत्कीर्ण अभिलेखबाट ज्ञात हुन्छ ।[20]

## दुमाजुचोकका कलाकृति

भक्तपुर राजदरबारको मूलचोकको उत्तर-पश्चिम कुनाको प्रवेशद्वारबाट सिधा पश्चिमतर्फ लागेपछि चारैतिर पर्खालले घेरिएको, बीचमा भण्डै वृत्ताकार-पोखरीसहितको एउटा फराकिलो चोकमा पुगिन्छ । यसै चोकको वायव्यकोणतिर दुमाजुदेवीको अनाकृत प्रस्तर-लिङ्गाकृत-प्रतिमा (पीठ) स्थापित छ । यसो हुँदा सो चोक दुमाजुचुक (दुमाजुचोक) नामले प्रसिद्ध रहेको छ । त्यसैगरी चोकको मध्यभागमा अवस्थित सो पोखरी पनि यिनै देवीको नामले दुमाजु पुखु प्रसिद्ध रहँदै आएको छ ।

दुमाजुचोकको पूर्वपट्टि मूलचोक र नासलचोक (नृत्यनाथ), पश्चिमपट्टि बसन्तपुर दरबारको बगैंचा,[21] उत्तरपट्टि जिल्ला अदालत र दक्षिणपट्टि भण्डारखाल पोखरी र कुमारीचोक छन् ।

दुमाजुदेवीको नित्य नैमित्तिक पूजाकर्म गर्नाका लागि १२ वटा थाम उठाएर जस्ताको छानाले छाएको मूलस्थानमा यिनको प्रस्तरनिर्मित अनाकृत-लिङ्गाकार प्रतिमा गाडिएको छ । त्यसको पार्श्वभागमा सूक्ष्म आकृतिको एउटा ढुङ्गे जलकुण्ड (चित्र संख्या १) पनि देखापर्छ । सो जलकुण्डलाई गुह्येश्वरी गचाः भनिन्छ । देवीका सामुन्ने तीनवटा ढुङ्गे पद्माकृति र सो संगै बायाँतर्फ एउटा ढुङ्गे पानस छ । सो ढुङ्गे पानससँगै बलिमा चढाईने पशु बाँध्नका लागि एउटा काठको मौलो गाडिएको छ । देवीका सामुन्ने दायाँ-बायाँ हाल एकजोडी मात्र ढुङ्गे-सिंह देखापर्छन् ।[22] यताबाट यस स्थानमा पहिले दुमाजुदेवीको मन्दिर थियो, समयको मारले विलुप्त हुन पुग्यो भन्ने कुराको संकेत मिल्छ । चोकमा यत्रतत्र मिल्किएर रहेको अवस्थामा देखापर्ने मन्दिरका प्रस्तर-वास्तु-अवशेष एवं दुमाजुदेवीको पार्श्वभागमा पश्चिमपट्टि लाम्चो परेको पेटीको अवशेष तथा त्यसमाथि थुप्रिएका वास्तु-अवशेषले पनि सो कुराको थप पुष्टि मिल्छ । यसरी मन्दिरकै अवशिष्ट भागको रूपमा देखापर्ने सो भग्न पेटीको गाह्रोमा पनि अड्याएर राखिएको अवस्थाको कीर्तिमुख (छेपु) र छत्रसहितले युक्त एउटा कलात्मक प्रस्तर-द्वार-तोरण देखापर्छ । यसको सामुन्ने ढुङ्गाका ४ वटा अनाकृत देखापर्छन् ।[23] त्यस द्वार-तोरणभित्र चाहिँ सूक्ष्म आकृतिको एक अनाकृत प्रस्तर-प्रतिमा (पीठ) स्थापित छ । यसको पनि दायाँ बायाँ एकजोडी सिंह छन् । सो प्रतिमाको माथितिर पेटीको तहमा ढुङ्गाको एउटा आसन जस्तो भागमा ४ वटा बाँदरका आकृति देखापर्छन् । ती बाँदर भिन्नाभिन्नै मुद्रामा बसेका अवस्थामा छन् । मन्दिरका वास्तु अवशेष सो पेटीको यत्रतत्र देखापर्छन् । यताबाट अनाकृत प्रतिमा स्थापित चोकका यी प्रमुख भागमा एउटा मात्र नभएर त्यसभन्दा पनि बढी संख्यामा साना ठूला मन्दिर बनेका थिए भन्ने कुरा दृष्टिगोचर हुन्छ ।

दुमाजुदेवीको उत्तरपट्टिको पूर्व-पश्चिम फैलिएको पर्खालको भित्तामा लश्करै निम्न प्रस्तर-कलाकृति (क्रमशः पश्चिमदेखि) देखापर्छ ।

चन्द्राकृति — तान्त्रिक भाग झल्कने यस आकृति (चित्र संख्या ३) को मुन्तिर वत्तीको भाँडो, सुकुण्डा आदि राख्ने कलात्मक रूपका साना ठूला खोपा छन् । चन्द्राकृतिको तल भुइँमा एउटा पद्माकृति छ ।

द्वारपाल — झ्वाट्ट हेर्दा लडाइँमा जान तम्सिएका झैँ लाग्ने यस मूर्तिका मनुष्य-आकृति उभिएका छन् । उनले ढाल तरबार लिएका छन् ।

एकजोडी सिंह — दायाँतर्फका सिंह खण्डित अवस्थामा छन् ।

द्वार-तोरण — यस्तो द्वार-तोरणभित्र मूर्ति हुनुपर्दथ्यो, यसभित्र छैन ।

इन्द्रायणी — अप्टभुजा, हात्ती वाहन

माहेश्वरी — अप्टभुजा, वृप वाहन

कौमारी — अप्टभुजा, मयूर वाहन । यिनको सामुन्ने बलिको पशु बाँध्ने ढुङ्गे मौलो छ ।

रीक्त खोपा — मूर्ति छैन ।

तलेजुभवानी — केही खण्डित र समयको मारले खिईसकेको देखिने यस मूर्तिको शैली स्वरूप भक्तपुर राजदरबार प्रवेश गर्ने स्वर्णद्वारको तोरणमा दर्शाईएकी मूलदेवी तलेजुभवानीसित मेल खान्छ । स्वर्णद्वारको तोरणमा झैं यस मूर्तिका भवानी पनि महीपासुरमर्दिनी स्वरूपमा विचार गर्दा स्वर्णद्वारको मूर्तिभन्दा यस मूर्तिमा केही प्राचीनता झल्कन्छ । सामान्यतया शैली लक्षण र प्राचीनताका आधारमा यस मूर्तिलाई ईशाको सत्रौं शताब्दीको पूर्वार्द्धतिरको अनुमान गर्न सकिन्छ ।

चतुर्बाहु नारायण — यस मूर्तिको दायाँ बायाँ एकजोडी भक्त ( स्त्री पुरूप-राजा रानी ?) देखापर्छन् ।

महविष्णु — प्रत्यालीढ मुद्राका यी महाविष्णु अप्टबाहुले युक्त छन् । यिनको सामुन्नेको पेटीमा आफना दुई खुट्टा उचालेर उड्न लागेको अवस्थाका एक सिंह छन् ।

अष्टबाहु महादेव — यी महादेव प्रत्यालीढ मुद्रामा छन् । त्यहाँ तिनका वाहन वृषभ पनि छन् ।



*चित्र संख्या ३ : दुमाजुदेवी अवस्थित उत्तरपट्टिको भित्तामा स्थापित चन्द्राकृति ।*

षडबाहु देवी — यिनी (त्रिपुरसुन्दरी ?) प्रत्यालीढ मुद्रामा छिन् । यिनको सामुन्नेको पेटीमा खण्डित अवस्थाको एउटा कलात्मक रूपको आसन छ ।

सुदर्शन चक्र — गदा र चक्र सहितको वृत्ताकार घेरा नागले वेष्ठिएका छन् ।

अन्य कलाकृति — माथिकै उल्लेखित सुदर्शन चक्रसँगैका लहरमा- उभिएका द्विवाहु-नारायण, पेटीस्थित रूद्राक्षमालाले पुरै जिउ ढाकिएको एक बसाहा, शिवलिङ्ग, पद्माकृति, देवता राख्ने आसन, रगत राख्ने कोँचा जस्तो भाँडो बिसाउने आसन, सजाउने प्रयोजनका निमित्त बनेको कुनै एक कलात्मक वास्तुको अवशिष्ट भाग आदि देखापर्छन् ।

**पाटी दुमाजुचोकको** उत्तरपूर्वमा पश्चिमाभिमुख सात कवलको एकनाले र दक्षिणपश्चिममा उत्तराभिमुख पाँच कवलको एकनाले गरी दुईवटा जीर्ण अवस्थाका पाटी देखापर्छन् । दुमाजुदेवीको पूजाआजा गर्न आउनेहरूलाई सजिलो होस् भन्नाका लागि (घाम पानीबाट बच्न, खान, बस्न) ती पाटी बनेका देखिन्छन् ।

**क्षेत्रपाल** दुमाजुचोकको दक्षिणपश्चिम कुनाको पाटीसँगैको भुइँमा ढोकाका खापा झैँ लाग्ने एकजोडी ढुङ्गे खापा बिच्छ्याईएका छन् । यसलाई क्षेत्रपालको रूपमा पूजा गर्ने चलन रहेको देखिन्छ । ती खापाका चारैतिर खण्डित अवस्थाका ढुङ्गे चौकोस पनि राखिइएका छन् ।[24]

**दुमाजु पुखु** दुमाजुचोकको मध्यभागस्थित यस पोखरीमा पुग्नका लागि यसको उत्तरभागमा ढुङ्गे सिंढी बनेको छ । सो पोखरीको चारैतिर इँटा र ढुङ्गाका गारो लगाइएका छन् । पोखरीभित्रबाट हेर्दा यसको शैली स्वरूप अष्टकोणाकार देखिन्छ । केही दशक अघिको तुलनामा हालका केही वर्षयतादेखि यस पोखरीको पानी सुक्दै गएको देखिन्छ । पोखरीको खासगरी उत्तरतिरको डीलमा अनेक कालका प्रस्तर-कलाकृतिका खण्डित भाग थुप्रिएका छन् । त्यहाँ ठूलाठूला रूखा झाँगिएका छन् र कतिपय कलाकृतिका भाग ती रूखका जराले चलाउनै नसकिने गरी च्यापिसकेका छन् ।

## दुमाजु-संस्कृति

तान्त्रिक परम्परामा अन्य मातृदेवीका तुलनामा महाकालीलाई निकै उग्र रूपमा दर्शाईएको पाइन्छ । शायद यसैकारण पशुबलि मात्र नभएर कहिलेकाहीँ नरबलि ग्रहण गर्न समेत महाकाली नै अगाडी पर्न आउने कुराको उदाहरण ने.सं. ७८० मा भक्तपुरको महाकाली पीठमा केही युद्धबन्दीहरू बलि चढाईएको घटनाबाट मिल्छ ।[25] गोपालराजवंशावलीको ३६ पत्र अनुसार वैशाख कृष्ण तृतीया आदित्यबारको राति युथुनिमम्की डोयिनी माम (डुइमाजु) देवीकहाँ तेजमाल रावुत मारिएको[26] घटनाले पनि दुमाजुदेवीको गुप्त पारिएको अनाकृतिमा रौद्र रूप धारण गरेकी भैरवी वा महाकालीको तान्त्रिक स्वरूपलाई झल्झली सम्झाएको छ ।[27]

भक्तपुरका राजा विश्वमल्ल (ई.सं. १५४७-१५६३) की रानी गंगादेवी र तिनका पुत्रहरू त्रैलोक्यमल्ल र त्रिभुवन मल्लको संयुक्त शासनकालसम्ममा आईपुग्दा दुमाजुदेवीको था पूजा (कमार्चन पूजा)[28]

हालै प्रकाशमा आएको एक ऐतिहासिक घटनावलीमा दुमाजुको बारेमा उल्लेखित रोचक एवं आश्चर्यलाग्दा घटना-वर्णनबाट यिनको पूजा विधान जटिल ढङ्गले विकसित हुँदै गईरहेको, भक्तपुर राजदरबारका दुमाजु लगायतका अन्य उच्चतम देवदेवीप्रति लौकिक आस्था एवं विश्वासका साथै सामाजिक संस्कार पनि बढिरहेको आदि अनेक कुरा थाहा पाइन्छ ।[29]

## दुमाजु-जात्रा

विश्वजात्रा (विस्केट) -संस्कृतिको मूल थलो भक्तपुर हो । यो कुरा यस विषयका अभिलेखिक एवं अहिलेसम्म चल्दै आएका सांस्कृतिक प्रमाणबाट निश्चित रूपले थाहा पाइन्छ । यस जात्राका मूलदेवता विश्वनाथ भैरव (विश्वेश्वर) र यिनका शक्ति भद्रकाली वा भैरवी हुन् । चैत्र मसान्तमा विश्वनाथ भैरवको एकजोडी ध्वजा (विश्वकेतु/वीरध्वजा/विश्वध्वजा) सहितको लिङ्गो ठड्याई वैशाख संक्रान्तिका दिनमा ढाल्ने दुईदिने जात्रा उत्तर प्राचीनकालतिरै प्रचलित भईसकेको दृष्टिगत हुन्छ । मध्यकालको उत्तरार्द्धसम्ममा आईपुग्दा सो दुईदिने मूलजात्रामा अनेक थरीका विधान एवं उप-जात्रा पनि थपिइँदै अन्ततः आठ रात नौ दिन लामो जात्राकै रूप लिन पुगेपछि सोही अनुरूप नेवार लोकजीवनमा च्याचा गुन्हुया जात्रा नाम पनि चलेको छ ।[30] यसरी विश्वजात्रा संस्कृतिभित्र अनेक कालमा आविर्भाव हुन पुगेका अनेक उपजात्रा (भैरवनाथको रथजात्रा, भैरव भद्रकालीको रथ जुधाउने जात्रा, महाकाली, महालक्ष्मीको जात्रा, ब्रम्हायणी माहेश्वरीको जात्रा आदि) मध्यको एउटा जात्रा चैत्र मसान्त (कोलुक्यात) र मेष संक्रान्ति (वैशाख संक्रान्ति) मा हुने दुमाजुजात्रा पनि हो । कान्तिपुर र ललितपुर भक्तपुरबाट स्वतन्त्र भएपछि त्यहाँका दरबारमा दुमाजुको प्रतिरूप मात्र नभएर प्रत्येक वर्ष मेष संक्रान्तिमा यिनको जात्रा त्यता पनि चलाएका रहेछन् भन्ने कुरा तात्कालिक ठयासफु, ऐतिहासिक घटनावली, अभिलेख आदि तथा हालसम्म पनि चल्दै आएको दुमाजुजात्राका आधारमा जानिन्छ । यद्यपि भक्तपुरबाट राजनैतिक दृष्टिले छुट्टिएर दरबारस्थित स्वेष्टदेवता-तलेजु, इष्टदेवता-दुमाजु आदि मूल देवीका प्रतिरूप प्रतिष्ठा गरी आफना सांस्कृतिक कुल-परम्परालाई अघि बढाएतापनि मूल राजकीय बासस्थान मात्र नभएर पूर्वजहरूका मूल देवदेवी पनि भक्तपुरमै भएका कारण अनेक चाडपर्व, जात्रा उत्सवताका यहाँका उच्चतम देवदेवी मानेश्वरी, दुमाजु, तलेजु, भैरव,

नवदुर्गा आदिलाई आ-आफ्ना राज्यबाट राजकीय पूजाभाग पठाउने परम्परा बसाले । कान्तिपुरका राजा प्रतापमल्ल पछिको समयमा कान्तिपुरमा टिपिएको वर्पकृत्ति नाम ठ्यासफूमा भक्तपुरमा विशेप पर्वका दिन पठाउनु पर्ने पूजाभाग र विधानको टिपोटको आरम्भ भक्तपुरको विश्वजात्राबाट भएको छ । [31] यसबाट पनि विश्वजात्रा-संस्कृतिको मूल थलो भक्तपुर हो भन्ने उपर्युक्त कुराको प्रामाणिक पुष्टि हुन्छ ।

कान्तिपुर ललितपुरलगायत अन्यत्रका तुलनामा भव्य रूपले मनाईने भक्तपुरको विस्केटजात्राको शुभारम्भ मेप संक्रान्तिको पाँचदिन अघि (चैत्र २७ गते) भैरवनाथको रथयात्राबाट आरम्भ हुन्छ भने समापन यात्रा पनि मेप संक्रान्तिको चारौं दिनमा (वैशाख ५ गते) रथजात्राबाटै हुन्छ । वर्पकृत्ति ठयासफूमा चैत्र शुक्ल,[32] स्याकोत्याको,[33] कुलुक्यात,[34] संक्रान्तिको क्रमबद्ध उल्लेख आएकोले तात्कालिक समयतिरै यो जात्रा आठ रात र नौ दिनसम्म अनेक उपजात्रा-उत्सवसहित मनाइन्थ्यो भन्ने कुरा थाहा पाइन्छ । स्याकोत्याकोदेखि नै दुमाजुदेवीको पूजा र जात्राको सिलसिला पनि शुरू हुन्छ ।[35]

नेपाल उपत्यकका तीनवटै मल्लकालीन दरबारको राजनैतिक महत्व ई.सं. १७६९ मा गोर्खालीहरूले भक्तपुर राजदरबार पनि अधिकार गरेपछि गुम्न पुगेतापनि सांस्कृतिक दृष्टिले चाहिँ यिनका केन्द्रीय नेतृत्व र महत्वमा अहिले पनि कुनै कमी आएको छैन । यस कुराको एउटा उत्कृष्ट उदाहरण विस्केट जात्रा पनि हो । यसोहुँदा चैत्र मसान्तमा भक्तपुर राजदरबारमा विश्वध्वजा पूजा गरिन्छ । अनि राजकीय प्रतीकका रूपमा मान्य खड्ग विधिपूर्वक लिङ्गो उभ्याईने स्थान (योसिंख्यः) मा पुऱ्याएपछि लिङ्गो खडा गरी जात्रा मनाईन्छ ।

चैत्र मसान्तमा लिङ्गो उभ्याउने जात्रा सम्पन्न भएपछि भक्तपुर राजदरबारस्थित दुमाजुदेवीको पीठमा फलाभिपेकसहित विशेप तान्त्रिक पूजाविधान र जात्रा हुन्छ । यसै क्रममा कर्माचार्य पुजारीले ताल्चाभडेललाई जजमान (राजप्रतिनिधिका रूपमा) तुल्याई विशेप पूजाकर्म गर्छन् । पुरै रात महादीप (चित्र संख्या ४) बालिन्छ । सोही महादीपलाई तान्त्रिक विधिपूर्वक महाभैरव/मसानभैरवको रूपमा पूजाकर्म चलाई छागबलिसहित गो तसि[36] नामक होम पनि गरिन्छ । सो विधानकै क्रममा पाकेको भातबाट बनेका ३२ वटा गोजा (द्वन्दु) महादीपलाई मध्य पारी वृत्ताकार ढङ्गले (चित्र संख्या ४) घेरेर राखिन्छ । ती ३२ गोजाले यहाँनिर कुब्जिकाका ३२ भेदलाई प्रतीकात्मक रूपमा दर्शाएको जानिन्छ । यसो हुँदा महादीपरूपी मसानभैरव र उनका ३२ शक्तिरूपी भैरवीको एकाकार रूप भई ज्योतिपुञ्ज दर्शनीय हुन आउँछ । त्यसैगरी सो महादीपको वायाँपट्टि नौ वटा वत्तीसहितको एउटा सानो घेरूवा-दीप (चित्र संख्या ४) पनि राखी त्यसलाई महाभैरवकै मूल शक्ति नवदुर्गासदृश् भैरवी रूपमा पूजा चलाईन्छ । तन्त्रको प्रतीकात्मक दार्शनिक दृष्टिमा यस गुह्य पूजाको एउटा मूल अभीष्ट जीवमुक्ति[37] पनि हो ।[38] भैरव रूपि महादीपमा बोकाको बलि चढाईदा त्यसको गर्धन आधा मात्र रेटी, भुँडीमात्र निकालेर राख्ने चलन छ ।[39] जीवमुक्ति-दर्शनको प्रतीकात्मक व्यावहारिक प्रयोग यस बलिपूजामा दर्शनीय हुन आउँछ । अनि मूगुठीका गुठियारहरूले दुमाजुदेवीको प्रतिमालाई विमानखटमा बसाली दुमाजुपीठदेखि मूलचोकसम्म जात्रा गरी लान्छन् र पुनः जात्रा गरी फर्काएर स्वस्थानमा पुऱ्याउँछन् । वैशाख संक्रान्तिको मिर्मिरे बिहानीमा महादीप-पूजा विसर्जन गरी हंस-बलिसहित दुमाजुदेवीको प्रत्यारम्भ-पूजा गरी खाइबसि नामक फलले फलाभिपेक विधान गरिन्छ ।[40]



*चित्र संख्या ४ : चन्द्राकृति-चिन्ह भएको कराहीमा तान्त्रिक विधिपूर्वक प्रज्वलित गरिएको महाभैरव वा मसानभैरव सदृश महादीप । प्रस्तुत चित्रमा सो महादीप भातले बनेको गोजाले घेरिएका छन् । ती गोजाले कुब्जिकाका ३२ भेदलाई प्रतीकात्मक रुपले दर्शाएका छन् । त्यसैगरी संगै एउटा घेरुवा-दीप पनि छ । ९ वटा बत्ती प्रज्वलित गरिने सो घेरुवा-दीप महाभैरवकै मूल शक्ति भैरवी वा मसानभैरवी सदृश छिन् ।*

यसप्रकार माथिका प्रसङ्गमा खाईबःसि (बकाइनु) नामक फलद्वारा गरिने फलाभिषेक विधानले दुमाजुदेवीको अघिल्लो दिनका पूजा विधान र यात्रालाई मेषसंक्रान्तिमा हुने यिनको पूजाविधान र यात्रालाई निरन्तरता दिएको हुन्छ ।[41]

आठ रात नौ दिन लामो विस्केटजात्राको एक अत्यन्त लोकप्रीय सांस्कृतिक उत्सव वैशाख संक्रान्तिमा दृष्टिगत हुने लिङ्गो ढाल्ने जात्रा, भैरव-भद्रकालीको रथ जुधाउने जात्राका अतिरीक्त दुमाजु जात्रा पनि हो ।[42] अतः नव वर्षको मिरमिरे विहानीको आरम्भसंगै भक्तपुर राजदरबारस्थित दुमाजुपीठमा देवीको दर्शनपूजनका साथै सोही चोकको पोखरी-दुमाजु पुखुमा विशेषगरी रून्चे लागेका बालबालिकालाई (बालरोग निवारणका लागि) नुहाउन ल्याउनेहरूको मेला दर्शनीय हुन आईपुग्छ । त्यस अवसरमा खाइबःसि (बकाइनु) फल प्रसादको रूपमा वितरण गरिन्छ ।[43]

दुमाजुदेवीलाई विमानखटमा राखी, जात्रा गरी लक्ष्मीविलासचोकमा ल्याएर राखिन्छ । सरकारीस्तरबाट खड्गसहितको राजकीय पूजाभाग लिएर आएको समूहले दुमाजुदेवीलगायत भैरव, भद्रकाली, ईन्द्रायणीका निमित्त पनि पूजाभाग लिएर आएको हुन्छ । अनि स्वर्णद्वार सामुन्ने ईन्द्रायणीलाई पूजा गरिसकेपछि सो समूह दरबारभित्र खड्गसहित प्रवेश गरी लक्ष्मीविलासचोकमा राखिएकी दुमाजुदेवीकहाँ पुग्छन् । त्यहाँ राजोपाध्याय पुरोहितले सो खड्गलाई दुमाजुदेवी सामु गुह्य तवरले पूजा गरिसकेपछि आफ्नो हातमा लिएर मूलचोकमा आउँछन् । त्यसपछि घट- दान, जोगीचक्र पूजा चलाई दर्शनधारीहरूलाई भोजन प्रदान गरेपछि[44] सोही खड्ग लिई उनी विधिवत् योसिंख्यतर्फ प्रस्थान गर्छन । उनले विधिवत् लिङ्गोलाई पूजा गरेपछि सो लिङ्गो ढाल्ने जात्रा वा विधान सम्पन्न गरिन्छ ।[45]

लिङ्गो ढाल्ने जात्रा सम्पन्न भएपछि गानबजानसहितको दुमाजुको टिंप्वा-जात्रा (चिराख बालेर चलाईने जात्रा) चल्छ । सो जात्राका सिलसिलामा तिनलाई खटमा राखेर राजदरबारको मूलप्रवेशद्वार-स्वर्णद्वारबाट बाहिर ल्याई वसन्तपुर दरबारको पश्चिमपट्टिको खुलाद्वारसम्म लगी पुनः फर्काई तुलाछें, चोछें हुँदै, सर्वसाधारणबाट पूजामान ग्रहण गर्दै भोलाछेंटोलका मूगुठीहरूको आगमगृहमा पुऱ्याईन्छ । त्यहाँ विधिवत् पूजा गरी देवीलाई फर्काएर ल्याउने क्रममा सुकुलढोकास्थित त्रिपुरविद्यापीठ आगममा लगिन्छ ।[46] सो आगमका सम्वद्ध कर्माचार्यहरूले दुमाजुदेवीलाई कुलेचा ले फलाभिषेक गरी द्यःदुकायृगु कर्मसहित आगमगृह भित्र्याउँछन् । अनि कर्माचार्यहरूले आफ्ना आगमका थापूजाका क्रममा दुमाजुदेवीसहित गरी पूजाकर्म समापन गर्छन् । त्यसपछि दुमाजुदेवीलाई त्यहाँबाट राजदरबारस्थित तिनको मूलस्थान भक्तपुर राजदरबारमा पुऱ्याइन्छ । यसरी दुमाजुजात्रा सम्पन्न हुन्छ ।

## उपसंहार

यस छोटो अध्ययन अनुसन्धानबाट नेपाल उपत्यकामा दुमाजुदेवीको आरम्भकाललाई पहिल्याउँदै जाँदा ईशाको तेह्रौं शताब्दीको पूर्वार्द्धतिर पुगिन्छ । अनि उपलब्ध प्रमाणबाट तिनको आदि-पीठ छामछुम गरी हेर्दा युथुनिमम् राजकुल (भक्तपुर राजदरबार) की दुमाजुदेवी नै सबभन्दा पहिले हाम्रो हातमा पर्न आउँछिन् । यताबाट उपत्यकामा दुमाजु मतको मूल थलो भक्तपुर हो भनी भन्न सकिन्छ । अनि दुमाजु-संस्कृतिकै आधारमा पनि भक्तपुर सांस्कृतिक मूल थलो हो भन्ने कुराको पुष्टि हुन्छ ।

राजनैतिक विखण्डनपछि कान्तिपुर र ललितपुरका शासकहरूले भक्तपुर राजदरबारस्थित आफना आगमदेवता मूलदेवी दुमाजु तलेजु आदिलाई अनेक कृति एवं पूजाविधान (थापूजा) बेलाबखतमा चढाई सम्मान प्रकट गर्दथे, राजनैतिक दृष्टिले पृथक भए तापनि धार्मिक सांस्कृतिक दृष्टिले चाहिँ मिलेका थिए भन्ने कुराको एउटा सानो उदाहरण तत्कालीन भक्तपुर राज्यका राजा प्राण मल्लका समकालिक कान्तिपुरका राजा नरेन्द्रमल्ल (अमर मल्ल) ले दुमाजुदेवीलाई ने.सं. ६६३ र ने.सं. ६७९ मा चढाएका माथि उल्लेखित तरीका र तिनमा उत्कीर्ण अभिलेखका अतिरीक्त ने.सं. ६६६ मा ६ वटा गजूर आगमदेवतालाई चढाएको कुरा घटनावलीबाट पनि मिल्छ ।[47]

दुमाजुदेवीलाई इष्टदेवता मान्ने भएकाले तिरहुतियाहरू डोय कहलिएका हुन् भने सोही अनुरूप यिनलाई इष्टदेवता मान्ने उपत्यका मल्ल, ब्राह्मण (राजोपाध्याय/उपाध्याय), मुलमी, जोशी, कर्माचार्य, वैद्य, ज्यापू (चौगुठी, मूगुठी), साल्मी आदि नेवारहरू पनि डोय नै हुन् ।

दुमाजुदेवी लक्ष्मी हुन् भन्ने कुरालाई सिद्ध गर्ने प्रयास यस अघिका अन्वेषकहरूबाट भईसकेको छ ।[48] हालै प्रकाशमा आएको, माथि उल्लेखित हर्षमल्ल देवको ने.सं. ६०२ को दुमाजुको जलपात्रको अभिलेखमा सो जलपात्र चढाएको फलले राज्यलक्ष्मी वृद्धि होस् भनी कामना गरिएबाट यिनका अनेक स्वरूपमध्येको एउटा तान्त्रिक रूप लक्ष्मी पनि रहेछ भन्ने कुराको थप संकेत मिल्छ । तर यसरी अभिलेखिक प्रमाणका विश्लेषणबाट यही एउटै मात्र रूप हेरी अन्य तान्त्रिक

कर्मकाण्डीय दृष्टान्त एव प्रमाणका विश्लेषणबाट यही एउटै मात्र रूप हेरी अन्य तान्त्रिक कर्मकाण्डीय दृष्टान्त एवं प्रमाणका आधारमा देखापर्न आउने तिनका माथि पनि उल्लेखित र अन्य अनेक तान्त्रिक स्वरूपलाई चाहिँ बिर्सन सकिन्छ ।[49]

नेवार सांस्कृतिक जीवनमा बिस्केट पर्वको तेश्रो दिनलाई जसरी स्याकोत्याको भन्ने चलन छ, त्यसरी नै त्यसको भोलिपल्टको विशेष सांस्कृतिक दिन चैत्र मसान्तलाई बुझाउनुपर्दा कोलुक्यात/कुलुक्यात/ क्वरुक्यात/कुरुक्यात भन्ने चलन अहिले व्यापक थियो ।[50] कालचक्रले कोलुक्यात बिर्सिएर अहिलेको बोलिचाली व्यवहारमा हराईसकेको छ । यस अन्वेषणबाट चैत्र मसान्तमा हुने दुमाजुदेवीको राजकीय-फलाभिषेक यात्रा कोलुक्यात हो भन्ने निर्क्यौल भएको छ ।[51] यति बुझेपछि पूरै प्रस्तुत अन्वेषणको फरक दृष्टिकोणका साथ छुट्टै अन्वेषण गर्न पनि हतार भइसकेको आभास हुन्छ । किनकी कोलुक्यात दुमाजुसित मात्र सम्बद्ध देखिन आएको छ । कोलुक्यात लाई फलाभिषेक मान्दा मानेश्वरी, तलेजु र अन्य उच्चतम देवदेवीलगायत राष्ट्रिय महत्वका मल्लकालीन सांस्कृतिक उत्सव, लोकजीवनका संस्कार, पूजाकर्म आदिमा समेत हुन्छ वा हुँदैन भन्ने कुरा पनि महत्वपूर्ण हुन आएको छ ।

मूर्त, अमूर्त संस्कृति पनि इतिहास पुरातत्वका सर्वकालिक साक्षी हुन् । अहिलेसम्म पनि कुनै न कुनै रूपले चल्दै आएको दुमाजु-संस्कृतिभित्रका अनेक विधान-प्रकरणले ऐतिहासिक सामग्रीका नखुलेका कुरा मात्र प्रकाशमा आएको नभएर पुरातत्वका दृष्टिले इतिहासको कालप्रवाहमा कुनैबेला कारणवश् विलुप्त हुनपुगेको युथुनिमम् नामको पूर्वमध्यकालको एउटा प्रसिद्ध दरबार दुमाजु अवस्थित भक्तपुर राजदरबार र सो परिसरकै पृथ्वीको गर्भमा पुरिएको छ । भन्ने कुराको आशलाग्दो संकेत पनि यिनले दिएको छ । पुरातात्विक उत्खनन हुन सकेमा सत्य कुरा प्रकाशमा आउने नै छ ।

मल्लकालमा राजकीय महत्वका साथ निकै धूमधामले मनाईने दुमाजुदेवीको जात्रा मात्र नभएर केही लोकप्रीय विधान पनि विलुप्त हुने अवस्थामा पुगिसकेको कुरा अन्वेषणबाट देखिन आएको छ । उदाहरणका निमित्त मेषसंक्रान्तिमा दुमाजुदेवीलाई त्रिपुर विद्यापीठ आगममा भित्र्याउने जात्रा केही वर्ष यतादेखि कारणबश् बन्द भइसकेको कुरा सुन्नमा आएको छ । कुनै बखत चरमचूलीमा पुगेको एक समृद्ध सभ्यताको दु:खद् पतनको यो एउटा सानो अमूर्त सूचक- नमूना मात्र हो । दुमाजुचोकमा पुगेपछि त्यहाँ यत्रतत्र छरिएका वास्तु-अवशेष मूर्त रूपमा देखा पर्ने केही ठूला नमूना हुन् । सुकेको दुमाजु पुखुले पनि यस्तै दु:खलाग्दो संकेत दिइसकेको छ । मानिसले नभएर त्यहाँ झाँगिएका रूखका जराले केही अवशेषलाई मात्र भए पनि मानिसको पञ्जाबाट चल्नै नसकिने गरी च्यापेर संरक्षण गरिरहेको देख्दा केही राहत मिल्छ । समग्रमा यसरी हराउँदै गएको यस्ता संस्कृति र विक्षिप्त कलाकृतिले यस्तो सन्देश दिन खोजेको प्रतीत हुन्छ -"हाम्रो देश सांस्कृतिक सम्पदाले धनी छ तर अवस्था चाहिँ साह्रै जीर्ण र जर्जर छ

## सन्दर्भग्रन्थसूची


1 लैनसिंह बाङ्देल-प्राचीन नेपाली मूर्तिको इतिहास, काठमाण्डौ, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०३९, पृष्ठ २१-२९, चित्र संख्या १-२९

2 पुरुषोत्तमलोचन श्रेष्ठ- भक्तपुरको नवदुर्गा गण, भक्तपुर, बविता श्रेष्ठ, वि.सं. २०६०, पृष्ठ ३-२४

3 डा. पुरुषोत्तमलोचन श्रेष्ठ- त्रिपुर र युथुनिमम् राजकुल, भक्तपुर, भक्तपुर नगरपालिका, वि.सं. २०५८, पृष्ठ १४-१५

4 (क) धनवज्रचार्य - डोयहरू को हुन् ? पूर्णिमा ४ पूर्णाङ्क, वि.सं. २०२१, पृष्ठ २०-३०

(ख) डोय को शाब्दिक अर्थ के हो र किन उनीहरूलाई मध्यकालीन-उपत्यकाबासीले डोय भने ? खोजकै विषय छ । तथापि यस बारेको एउटा चित्तबुझदो तर्क-टिप्पणी चाहिँ कुलचन्द्र कोइरालाले यसरी प्रस्तुत गरेका छन्- देव शब्दको पालि प्राकृतमा डोय हुन्छ । महाराष्ट्री प्राकृतमा पनि यो शब्द व्यवहार भएको हुन्छ । अत: देव नामान्तधारी राजाका पूजाहरू अथवा तिरहुँतिया डोय कहलाएको पाइन्छ । "भगवती दुमाजु" नेपाली संस्कृति, वर्ष ६, अंक ३, २०४७, पृष्ठ ३

5 धनवज्र वज्राचार्य - जनकपुरलाई पुन: प्रकाशमा ल्याउनमा सेन राजाहरूको योगदान सिंहावलोकन, मैथिली विशेषाङ्क, वि.सं. २०४६, पृष्ठ ३५

6 नेपाल उपत्यकामा डोयहरूको पहिलो आक्रमण ने.सं. २३१ मा भएको थियो । (धनवज्र वज्राचार्य, कमल प्रकाश मल्ल-दि गोपालराज वंशावली, काठमाण्डौ, नेपाल रिसर्च सेन्टर, ई.सं. १९८५, ३२-३३ पत्र)

7 Mark S.G. Dyczkowski-The Cult of the Goddess Kubjika, Stuttgart, Franz Steiner Verlag, 2001, 1-78.

8 "ॐ नम: श्रीकूब्जिकादेव्यायै ॥ ततो दुमाजुया थापूजा विधि लिषित ॥ ... इति श्री कुब्जिकादेवीया थापूजा विधि ..." (भक्तपुर तलेजुका पुजारी सुरेन्द्रवीर कर्माचार्यको संग्रहमा रहेको दुमाजु-पूजापद्धति ग्रन्थ अनुसार)

9 श्रेष्ठ, २०५८, पृष्ठ २१-२९

10 "सं. ३८१...वेशाष कृष्ण आदीवार रात्रिस युथुनिमम् डोनिमम् डोयिनी माम नम देवीसके स्याङ्गा तेजमाल रावुतस्यम्"(३६ पत्र)

"सं. ४७०... ड्वयिनी मामसके भैरवपट याङ ..." (५२ पत्र)-वज्राचार्य, मल्ल, १९८५

11 "ॐ नमः श्री डुइनी मातृका देव्यै श्रीश्रीश्री डुयिनी मातृका इष्टदैवत्यां नित्य कर्मार्चन निमित्यर्थ श्रीश्रीश्री जययक्षमल्लदेवस्य जामात्रा श्रीश्री जय हर्षमल्ल देवन श्रीश्री रत्नादेवी प्रतिमा रजतनिर्मित जलपात्रं ... सम्वत् ६०२ माघवद्वि ४ शुभमस्तु" डा. पुरुषोत्तमलोचन श्रेष्ठ भक्तपुर तलेजुको जलपात्रका अप्रकाशित अभिलेखहरू,पासूका, वर्ष २, अङ्क ९, वि.सं. २०५५, पृष्ठ ३

12 "दक्षिण कर्णाटक देशदेखि नान्यदेव राजा आई यो नेपालमा प्रवेश गरी द्विमाजु देवी स्वेष्टदेवतासहित गरी आई नेपालका राजाहरूकन भगाया।" नयनाथ पौडेल (सम्पादक)- भाषा वंशावली भाग २, काठमाण्डौ, पुरातत्व विभाग, वि.सं. २०२३, पृष्ठ ३

13 डोयहरूले मान्ने इष्टदेवता भएको हुँदा दुमाजु प्रचलित रहेको मत धनवज्र वज्राचार्यलगायतका एकथरीका इतिहासकारहरूको रहेको छ। गौतमवज्र वज्राचार्यको अभिमत यस विषयमा यस्तो छ - "डोयहरूको देवता भएकोले ती देवीको नाम डोयिनी माम अर्थात् डोयहरूको पूज्य देवी भन्ने रहन गएको देखिन्छ। दुमाजु डोयिनी मामकै अपभ्रंश हो तथा ती दुवै एउटै देवता हुन् भन्ने बुझिन्छ"( हनुमानढोका राजदरबार, कीर्तिपुर, नेपाल र एसियाली अध्ययन संस्थान, वि.सं. २०३३, पृष्ठ १५४)

14 गोपालराजवंशावली, भूमिसम्बन्धी तमसूक ताडपत्र, शिलापत्र लगायतका अनेक कालका केही मध्यकालीन ऐतिहासिक सामग्रीमा उपाध्याय-ब्राह्मण, मुलमी बैद्य, मानन्धर आदिलाई पनि डो/डोय विशेषणले सम्बोधन गरिएको पाईएको छ। यो कुरा विचारणीय छ। यताबाट डोयहरूले मान्ने देवीमात्र नभएर तलेजुको आगमनपूर्व र त्यसपछि पनि तिरहुतबाट अनेक कालमा नेपाल उपत्यकामा आई बसोबास गरी यहाँको समाज, प्रशासन, धर्म, राजनीति आदिमा समेत उल्लेखनीय प्रभाव र हैसियत जमाउन सफल रहेका उपर्युक्त अनेक जातिहरू पनि उपत्यकाको लौकिक जीवनमा डोय कहलिएका थिए भन्ने कुराको संकेत मिल्छ। यस विषयमा छुट्टै अध्ययन हुनु आवश्यक छ।

15 ईशाको सोह्रौं शताब्दीको पूर्वार्द्धसम्ममा दुमाजुदेवीको प्रतिरूपको प्रतिष्ठा स्वतन्त्र राज्य कान्तिपुर र ललितपुरमा भईसकेको दृष्टिगोचर हुन्छ।

16 १स्वस्ति ॥ श्रीश्री जययक्षमल्लदेवस्य भार्या श्रीश्री कर्पुरदेवीतस्या अनिज श्रीश्री जय हर्षमल्लदेव तेनापि निवेदित मिदं जलपात्र शुभमस्तु (श्रेष्ठ-०५५, पृष्ठ ३) रत्नादेवी हर्षमल्लदेवकी पत्नी तथा यक्षमल्लकी बहिनी हुन्। कर्पुरदेवी चाहिँ यक्षमल्लकी रानी तथा हर्षमल्लदेवकी दिदी हुन्। (श्रेष्ठ-उही, पृष्ठ ३-४)

17 यताबाट बहुमूल्य पत्थर, सुन, रत्न आदिले निकै कलात्मक रूप दिएर बनाईने यस्ता आभूषण विशेषगरी मल्लकालको राजपरिवारलगायतका उच्च सामाजिक हैसियत भएका वर्गमा प्रचलित रहेको जानिन्छ।

18 (क) १श्री ३ दूयिनीमाजुस्त श्री २ जयनरेन्द्रमल्लदेवन ध्व तरीका दुता सं. ६६३ चैत्रवदि ६।

(ख) १श्री ३ दूयिनीमाजुस्तं श्री २ जयनरेन्द्रमल्लदेवन ध्व तरीका सं. ६७९ पौषवदि १०

19 श्रीश्रीश्रीदुमाजुस्के लाकचंगल दाङास श्रीश्रीजय भूपतीन्द्रमल्ल दयका (डा. पुरुषोत्तमलोचन श्रेष्ठ-दुमाजुको अप्रकाशित अभिलेख, पासुका, वर्ष ४, अङ्क ३, मंसिर १, ०६०, पृष्ठ ५

20 त्रिखुटीको अभिलेख- १ श्री ३ दुमाजस वस्त्र न दयकाव श्री २ जय रणजि (त) मल्लदेवसन दुंता.तो. ११ मं. ८ त्रय सं.८४४ चैत्र शुदि १५ शुभ ॥

| | | |
|---|---|---|
| कलात्मक पात्रका अभिलेख | (क) | १स्वस्ति ॥ श्री ३ दुमाजुया वस्त्र न श्रीश्रीजय रणजितमल्लदेवसन दयकाव दूता ॥ सं. ८६९ चैत्रवदि ६ तो. २० मं. २ ग्यं शुभं ॥ |
| | (ख) | १स्वस्ति ॥ श्री ३ दुमाजुया वस्त्र न श्रीश्रीजय रणजितमल्लदेवसन दयकाव दुता सं. ८६९ चैत्रवदि ६ तो २२ मं. २ ग्यं शुभं ॥ |
| सिन्हम्हूको अभिलेख: | | १ स्वस्ति श्री ३ दुमाजुया दाम न दयका श्री २ जय रणजितमल्लदेवसन सं. ८६९ चै.व. ६ तो. ९ मं. ७ ह |
| ज्वला न्हायकंको अभिलेख: | | श्री दुमाजुया वस्त्र न दयका<br>सं. ८६९ चैत्रवदि ६ तो. ७ र ४ |
| सिंहासनको अभिलेख: | | १स्वस्ति श्री ३ दुमाजुया वस्तु न श्रीश्रीजयरणजितमल्लदेवसन सुवर्णवृक्षतोरण छेभलकुट सहितन दयकाव दुता ॥ ८६९ |

21 यस बगैंचामा तत्कालीन राणा प्रधानमन्त्री पद्म शम्शेरको नामले बनेको श्रीपद्म हाइस्कूल बसेको छ।

22 इपाछेंटोल निवासी विनोदराज शर्माका अनुसार केही समय पहिले यहाँ ती भन्दा केही साना आकृतिका अर्को एकजोडी सिंह थिए।

23 विनोदराज शर्माका अनुसार पीठ रूपका ती ढुङ्गालाई नारायणका रूपमा मान्ने चलन छ।

24 यी खापा खोलेर हेर्न हुन्न, गुप्त स्थानको प्रवेशद्वार यो हो, यताबाट भण्डारखाल पुगिन्छ भन्ने जनधारणा चलेको पाइन्छ।

25 डा. पुरुषोत्तमलोचन श्रेष्ठ, अरिहिटीका अभिलेखहरू, भक्तपुर, संख्या १२५, वि.सं. २०५४, पृष्ठ ४३

26 ... वैशाख कृष्ण तृतीया आदीतवार रात्रिस युथुनिमम् डोयिनी माम नाम देवीसके स्याङा तेजमाल रावुतस्यम् (वज्राचार्य, मल्ल, १९८५, ३६ पत्र, अनूदित पृष्ठ ९२)

27 यहाँनिर कोइराला (०४७, पृष्ठ २) ले उल्लेख गरेको प्राचीन डुम्भ जातिकै सन्तान कोलमुण्डाहरूका देवी डुम्बादेवीको पनि स्मरण हुन्छ जसलाई नरबलि लगायत विभिन्न पशुबलिद्वारा उपासना गरिन्थ्यो। यद्यपि दुमाजुदेवी र डुम्बादेवी शक्तिको एउटै रूप र एउटै मूल शब्दको अलि फरक तर उही नामका केही सामान्य अन्तर मात्र हुन् वा होइनन् भन्ने कुरा चाहिँ खोजिकै विषय छ।

28 तलेजुका राजोपाध्याय-ब्राह्मण, जोशी र कर्माचार्यद्वारा सम्पन्न गरिने तान्त्रिक पूजा विधान।

29 केही उदाहण यसप्रकार छन् :-

गंगाराविणस वेरस, त्रिभयटो बेलस ॥ ॥दुमाजुस्के, वास, हि रुयाव, थ्वबेलसं, मभिं थापुजा याङा गंगा राणि त्रिभत्वं ॥(गंगारानीको पालोमा, त्रिभय ...का बेलामा ॥ ॥ दुमाजुकहां दांतमा रगत बगेर, यति बेला, अशुभ (भयो) था पूजा गरियो गंगारानी त्रिभय ...। (संख्या ४)

गंगाराणिया म्हं १६ दुगु, तलेसजुस्के, म्हं २दुमाजुस्के ...... म्हं ८ तलेजुस्के, म्हं २ दुमाजुस्के, मेर म्हं जुजुया म्हं ६ म्हं २ दुमाजुस्के ॥ न्यानघढिचा, ग्वड, त्रिभयत्वं म्हाति २ बिया ... (गंगारानीको १६ वटा बोका तलेजुकहाँ, २ वटा दुमाजुकहाँ ... तलेजुकहाँ ८ वटा, अर्का राजाको ६ वटा, २ दुमाजुकहाँ ॥ रकसीको पवित्र भाँडो, पान त्रिभय ... लाई बेगलाबेग्लै दिइयो)

(संख्या ५-६)

सम्वत् ६९९ माघवद्धि ५ ध्व कुन्हु पूजायाङा, श्रीश्री गंगाराणि प्रमुखं त्रिभयत्वं ॥ ॥ राजायापनिस, चुडाकर्णया, दुसलकुन्हु दुमाजुस्कके... पूजा माला ॥ (संवत् ६९९ माघ कृष्ण ५ यो दिन पूजा गरियो, श्रीश्री गंगारानी प्रमुख... राजाहरूको चूडाकर्मको भित्र्याउँदा)* खेरी दुमाजु कहाँ पूजा चाहिन्छ ।

(संख्या ७)

श्रीश्री गंगाराणि त्रिभयत्वं ॥ सम्वत् ६९९ माघ शुदि ५ ॥ ॥ दुमाजुस्के नित्यकर्म याङाव चोले , जगत न् देव जापर बरे, थियाव, पुनर्व्वांट मर्ज्जाताथे नित्यकर्म याङा...(श्रीश्री गंगारानी तीन भय (हुँदा) ॥ संवत् ६९९ माघ शुक्ल ५ ॥ ॥ दुमाजुकहाँ नित्यकर्म गरिरहँदा जगत (भन्नेले) देउताको बलिपात्र ... छोएरफेरि एकपल्ट मर्यादा अनुसार नित्यकर्म गरियो ...)

(संख्या ९)

सम्वत् ८०५ ... दुगुम्हं २, दुथुस, म्हं मांनेश्वरीस, म्हं १, दुमाजुस्के, न्यानसमय, थापूजा जोरण ॥ (संवत् ८०५ ... दुईवटा बोका दुधु ( देउता) कहाँ मानेश्वरीकहाँ १, दुमाजुकहाँ १ माछा# सहितको समय् र थापूजा (बेलाका) सामग्री)

(संख्या ३५-३६)

योगेशराज अहिलेसम्म प्रकाशमा नआएको एउटा ऐतिहासिक घटनावलि, पासूका, वर्ष ४, अंक ५, माघ १, ०५६, पृष्ठ ३-८

* विनोदराज शर्माका अनुसार कुनै पनि दशकर्म विधानको एक दिन अघि गरिने पूर्वाङ्ग-कर्मलाई दुसुल भनिन्छ । आजभोलि प्रचलित दुसो कै पूर्व रूप यो दुसल हो ।

३ विनोदराज शर्माका अनुसार रक्सीसहितको समयलाई न्यानसमय् भनिन्छ । स्थानीय लोकजीवनमा आजभोलि पनि रक्सीसहित समय् चढाउनुपर्दा न्यांसमय छाय्गु भन्ने चलन छ ।

30 पुरुषोत्तमलोचन श्रेष्ठ- भक्तपुरको नवदुर्गा गण, भक्तपुर, बविता श्रेष्ठ, वि.सं. २०६०, पृष्ठ १०३, १८१

31 (१)

१. ॐ नमः गणेशायः ॥ चैत्रशुक्ल, ॥ विश्वजात्राया, खंप्वस, स्वान केपो-
२. ल छोय ॥ पोल १ दुमाजुस्त ॥ पोल १ वंकुलि ॥ पोल १ मानेश्वरी ॥ पोल१
३. पिथु ॥ पोल १ सकलभिं ॥ पोल १ तलेजुस्त । ध्वकंथनं जोपयके ॥ दं १४
४. ग्वय ३५ दुगु म्हं ३ ॥ ध्वते, स्याकोत्याको, न्हथु कुन्हु खंप्वस छोय ॥ ॥
५. तवदेलस,स्याकोत्याको कुन्हु, थापूजा याय ॥ दुमाजुस्के, पंचबलि जक्व
६. उपल ॥ ॥ कुलुक्यात कुन्हु, खंप्वस स्वन केपोल छोय ॥ पोल ८ दं ४

(२)

१. ग्वय ५ ॥ पोल १ दुमाजुस्त ॥ पोल १ वंकुल ॥ पोल १ मानेश्वरीस्त ॥ पोल
२. १ पिथु ॥ पोल १ तुपोरजु, आदिन, राजपूजायातं ॥ पोल १ भैरवजं ॥
३. पो १ नकिनिजु ॥ पोल १ तलेजुस्त ॥ ध्वकंथनं स्वानके जपयके ॥ हंस
४. म्हं ६ न बो थय, म्हं ३ दुमाजु, म्हं १ बताजु, म्हं १ नकिनीजु, म्हं १ भैर-
५. वजु, म्हं १ तुपोलजुस्त, ध्वते खंपोस छोय ॥ ॥ कुलुक्यात कुन्हु
६. यंया कसिक्व दुमाजुस्त, वसंतपूलि दुमाजुस्तं, पूजा जु २ नेभेयातं

(३)

१. १२ ग्वय ३० हंस म्हं ४ ॥ नेभेयान ॥ ध्व हंस म्हं २ राजस दु बिय ॥
२. म्हं २ आचार्ययातं काय ॥ ध्वते कुकुक्यात कुन्हु ॥ ॥ संक्रान्ति कु-
३. न्हु पूजा जु २ हंस म्हं २ नेभेयातं ॥ नैव्यद्य जोरन दयकाव जुजु बि-
४. युव, हंस म्हं १ न दवथ्यं स्मय याय ॥ मर्ज्जातथ्यं देव चालन याङाव
५. सिन्धूरि जात्रा याङाव, देव दुहा विज्याचके, देश ड्ुयकाव स्वकनबुस,
६. पूजा जु २ हंस म्हं २ नेभेयात, देव थापना याङाव यात्रा याङतय"

धनवज्र वज्राचार्य-वर्षकृत्ति : एक अप्रकाशित ठयासफू, कन्ट्रिव्युसन्स टू नेपालिज स्टडिज, भोलम १४, नं. १, डिसेम्बर १९८६ पृष्ठ ७६-७९

32 नयाँ संवत्सर शुरू हुने दिनलाई मानेर चैत्रशुक्ल भनिएको हो । किनकी ज्योतिषशास्त्र अनुसार सो दिनलाई वत्सरारम्भ मानिन्छ । साठीवटा संबत्सरमध्येको एउटा संवत्सर चैत्रशुक्ल प्रतिपदादेखि शुरू हुन्छ । (विनोदराज शर्मा)

33 वडादशैंको महानवमीमा खःमे नामको एउटा भीमकाय रागोलाई नवदुर्गा देवगृहदेखि ब्रह्मायणीपीठमा दौडाएर जात्रा गरी (खःमे ब्वाकिगु जात्रा) पुऱ्याएपछि सो रांगोलाई बलि चढाईन्छ । त्यसको मासुका टुक्रा प्रसादको रूपमा बाँडिन्छ । त्यसैगरी विस्केटजात्राको तेश्रो दिनमा पनि लाकोलाछेंटोलस्थित भैरवनाथको देवगृहमा लाकोफेत नाम गरेको एउटा त्यस्तै भीमकाय राँगोलाई बलि दिई त्यसको मासुलाई आठ-आठ टुक्रा पारी बाँडने चलन छ । यसप्रकार देवदेवीलाइ बलि चढाउने ती दुबै सांस्कृतिक दिनलाई जनजीवनमा स्याकोत्याको भन्ने चलन छ । विस्केटको स्याकोत्याकोमा भक्तपुर (देश) भरका जनताद्वारा देवदेवीलाई बलि चढाउने सांस्कृतिक-कर्म निकै हुन्छ ।

34 चैत्रमसान्तमा हुने राजकीय-फलाभिषेक यात्रा । यसको चर्चा तल

पनि आउँदैछ ।

35 विस्केटजात्राको तेश्रो दिन- स्याकोल्याको पर्वमा इपाछेंका राजोपाध्याय-ब्राह्मण र थाछेंका जोशीहरूले इष्टदेवता दुमाजुदेवीलाई एकैसाथ देवालीपूजा गर्छन् । त्यसैगरी तलेजुबाट (सरकारी पूजा) छागबलिसहित पूजा चलाईन्छ । चोकाभडेल आदिले पनि पूजा गर्छन् । चौगुठी मूगुठीहरूले महीष-बलिसहित पूजा गर्छन । (स्थलगत अवलोकन/दुमाजुका पुजारी सुरेन्द्रवीर कर्माचार्य एवं दुमाजुदेवीलाई इष्टदेवता मान्दै आएका विनोदराज शर्माबाट प्राप्त जानकारीका आधारमा)

36 चुरोसहितको सिङ्गो विमिरालाई नेवारीमा गो तसि भनिन्छ ।

37 पूजारी सुरेन्द्रवीर कर्माचार्यका अनुसार

38 तन्त्रका प्रतीक-दृष्टिमा यी मसानभैरव र भैरवी विस्केट जात्राका मूलदेवता विश्वनाथ भैरव र भद्रकाली सदृश देखापर्छन् । विस्केटजात्रा हुने थलो योसिख्य मसानपरिसरमै अवस्थित छ र भद्रकाली पीठ पनि त्यहीं छ । जीवमुक्तिका अभीष्टसिद्धिमा विस्केटजात्रालाई मसानजात्राकै रूपमा पनि मान्न सकिन्छ र बाहिर जनजीवनमाझ हुने सो जात्रा संचालनको अदृश्य साँचो भक्तपुर राजदरबारको दुमाजुपीठको गुह्य तान्त्रिक पूजाविधानमै पनि दृष्टिगत हुन आउँछ ।

39 त्यसबखत अष्टमातृकापीठका सम्बद्ध पूजारीहरूले यहाँ पूजा-प्रसाद लिन आउँछन् र त्यसपछि सम्बद्ध पीठमा फर्की सोही शैलीमा बोकाको बलि चढाउने चलन छ ।

40 चैत्रमसान्तमा गरिने दुमाजुदेवीको राजकीय-फलाभिषेकसहितको पूजाविधानलाइ कोलुक्यात भनिएको हो भन्ने कुराको प्रामाणिक पुष्टि वर्षकृत्ति ठ्यासफूको अतिरिक्त ऐतिहासिक घटनावलिका निम्न उद्धरणबाट पनि मिल्छ :

"१ राजया, कोलुक्यात पानङाव, श्री ३ दुमाजुस्के याय, राजपूजा छोय माल,

माडलजा तयमाल, देवताजनजुको दयकाव, वाजन मूलचुंकस जु-को दियमाल, ...

(चुन्दा वज्राचार्य मध्यकालया छुं घटनावली छगु अध्ययन, यें, सफू धुकू, ने.सं. ११०७, पत्र संख्या५ ख)

त्यसैगरी जितामित्रमल्लकालीन धर पौः का निम्न उद्धरणबाट पनि उक्त कुराको थप प्रामाणिक पुष्टि मिल्छ :-

"श्री ३ दुमाजु आदित्यवार, कुलुक्यात रात्री मजात्रा थें पंचोपचार पूजा ... दुगु म्हं १ महादीप ... म्हं १ मेश ... खासि ग्व १"

(पौ.ल्याः ३२३क)

"आदित्यवार कुरुक्यात रात्री, हंस म्हं ... महादीप ... ध्वते विसक्यातया जुरो ॥ ॥"

(पौ.ल्याः ३२३ ख)

(डा. चुन्दा वज्राचार्य (सं.) जितामित्रमल्लकालीन धर पौः,कीर्तिपुर, नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०५३, पृष्ठ ३०६-७)

माथिका प्रमाणलाई लगत अर्थ लगाई वज्राचार्यद्वारा (ने.सं. ११०७, पृष्ठ २०, २१) कोलुक्यात र विस्क्यात लाई एउटै मानी कोलुक्यात नै विस्केट हो भन्ने कुरालाई एकोहोरो ढङ्गबाट प्रष्ट गर्ने प्रयास भएको छ । तर ती नै प्रमाण एवं माथि चर्चा गरिएका अन्य ऐतिहासिक सामग्रीलगायतका सांस्कृतिक प्रमाणका आधारमा विस्केटजात्राभित्रकै दुमाजुदेवीसित सम्बद्ध एक उपजात्रा वा राजकीय फलाभिषेक-यात्रा कोलुक्यात (कोलुके+यात= कोलुक्यात) हो भन्ने कुरा सिद्ध हुन्छ ।

नेवार सांस्कृतिक जीवनमा ऋतु अनुसार फल्ने अनेक प्रकारका विशेष फलले पनि खास महत्व पाउँदै आएको छ । तसि विमिरा, तुसि-काँको, खाइसि-कीप, खाइबसि-बकाइनु आदि उदाहरण छन् । अनाज भर्ने एक किसिमको भाँडोविशेषलाई नेवारीमा कुलेचा भनिन्छ । त्यस्तो कुलेचामा फलफूल र उखुका टुक्रा राखी अभिषेक गर्नुपर्दा सिको तुको लुकेगु भनिन्छ । त्यस्तै कुलेच मा फलफूलका टुक्रा राखी म्ह पूजा, किजापूजा आदि विधानहरूमा मात्र नभएर दुलही भित्र्याउँदा पनि साक्षात देवी कुमारी नै मानी अभिषेक गर्ने चलनलाई कुलेचा लुकेगु भनिन्छ । त्यसरी नै दुमाजुदेवीलाई तसि, खाइबसि आदि फलले अभिषेक गरी जात्रा गर्ने फलाभिषेक- विधानलाई कोलुक्यात भनिएको हो भन्ने कुराको निर्क्यौल हुन्छ । विस्केटजात्राका भैरवनाथको रथको अँसिमा कसिएर बाँधिईएका वीरवेताललाई विधिपूर्वक चक्का-चक्का पारी काटेर बनाइएको खाइसि-माला लगाईदिने विधानमा पनि कोलुक्यात-संस्कृति (फलाभिषेक-उत्सव) दृष्टिगोचर हुन्छ ।

A Dictionary of Classical Newari [Kathmandu, Nepal Bhasa Dictionary Committee Cwasa Pasa, AD 2000, pp. 62] मा देवरथको ध्वजस्तम्भबाट नरिवल र रोटी छर्ने जात्रा कोलक्यात हो भनी (ठ्यासफूमा उल्लेखित "राजया कोलुक्यात पानङाव दुमाजुस्के याय" उद्धरण दिई) यसरी परिभाषित गरिएको छ : name of a festival in which bread and coconuts are showered from the mast of a god's chariot, दुमाजुको उद्धरणसहितको यस परिभाषाले प्रकारान्तरमा कोलुक्यातको अर्थ फलाभिषेक यात्रा नै हो भन्ने कुरा बुझिन्छ । तर दुमाजुको प्रसङ्गमा चाहिँ माथि उल्लेखित सांस्कृतिक प्रमाणतर्फ यस परिभाषाको अध्ययनपछि पुनर्विचार गर्दा दुमाजुलाई नरिवल र रोटीले अभिषेक गर्ने चलन देखिएन । यसले ता यहाँनिर मत्स्येन्द्रनाथको रथमाथिको खाँबोबाट श्रद्धालु भीडका माझमा फलप्रसादको रूपमा जटा-नरिवल वृष्टि गर्ने नंक्याले लुइनु नामक रोचक परम्परालाई झल्झली स्मरण गराएको छ । (श्रेष्ठ, २०६०, पृष्ठ १८३)

41 मौलिक विचार साभार- विनोदराज शर्मा, सुरेन्द्रवीर कर्माचार्य

42 (क) कान्तिपुर र ललितपुरमा पनि यसै दिनमा दुमाजुजात्रा चलाइन्छ । तत्कालीन कान्तिपुरका राजा भूपालेन्द्र मल्लकी रानी भुवनलक्ष्मीले विश्वजात्रा विधानका क्रममा हुने दुमाजुदेवीको पूजाका लागि ने.सं. ८२९ मा राखिदिएका भाँडाकुँडामा उत्कीर्ण अभिलेखबाट यसभन्दा पनि अघिदेखि नै वा कान्तिपुरमा दुमाजुदेवीको प्रतिष्ठाकालदेखि नै यिनको पूजाविधान र जात्रा चलिसकेको तथा यसकालसम्म आईपुग्दा दुमाजु-संस्कृति अपरिहार्य राजकीय परम्परा बनिसकेको थियो भन्ने कुरा थाहा पाइन्छ । वज्राचार्यले (०३३, पृष्ठ २४६-४७) ५३, ५४ र ५५ संख्यामा प्रकाशमा ल्याएको भुवनक्ष्मीदेवीका ती अभिलेखका सारांश यसप्रकार छन् -

श्री दुमाजुया विश्वयात्रा ... नभोभास पूजायायत,ध्व लिलया कोटल

श्री २ भुवनलक्ष्मी देवीसन दुन्ता जुरो ॥ ... सम्वत् ८२९ चैत्र वदि ५ मेख सन्क्रान्ति अंगारवार थ्व कुन्हु शुभ ॥ (५३ संख्या)

श्री ३ दुमाजु प्रीतिन दस छपोल मेखसंक्रान्ति कुन्हु पूजा याय यात श्री ३ भुवनलक्ष्मी देवी सन दुन्ता सम्वत् चैत्र वदि १४ मेखसंक्रान्ति शुभ (५४ संख्या)

माथिका अभिलेखमा "दुमाजुको जात्रालाई विश्वयात्रा भन्ने संज्ञा दिईएको छ ..." भनी वज्राचार्यले लेखेका छन् । (ऐजन पृष्ठ १५५) तर अभिलेखको मूल आशय त्यसो नभएर माथि चर्चा भए बमोजिम विश्वजात्रा विधानका क्रममा हुने दुमाजुदेवीको पूजाका सिलसिलामा विश्वयात्राको उल्लेख ती अभिलेखमा हुन आएका हुन्, दुमाजुजात्रालाई विश्वजात्रा भन्न खोजिएको होइन भन्ने कुरा बुझिन्छ । यदि यसो होइन र वज्राचार्यको माथिको भनाईलाई मान्दा मेषसंक्रान्तिमा हुने अन्य महत्वपूर्ण विधानलाई एकातिर पन्छाई, दुमाजुजात्रा मात्रै विश्वजात्रा हो भनी अर्थ लगाउनु पर्ने हुन्छ । अनि त्यसरी अर्थ लगाउँदा कान्तिपुरको मात्र नभएर अन्य दिन, आगामि दिन र यसै दिनमा हुने विधान वा जात्रालाई छोडि मेषसंक्रान्तिमा हुने दुमाजुजात्रालाई नै विश्वजात्रा भनी मान्नुपर्ने हुन्छ । अनि वर्षकृत्ति ठ्यासफूमा उल्लेखित चैत्रशुक्लदेखिको विश्वजात्रा विधानका साथै स्याकोत्याको, कोलुक्यातलगायत अहिलेसम्म चल्दै आएको आठ रात र नौ दिन लामो मल्लकालीन विश्वयात्रालाई कहाँ राख्ने त ! यसकारण उपलब्ध ऐतिहाक सामग्री र प्रचलित सांस्कृतिक प्रमाणको तुलनात्मक अध्ययनबाट निस्कने सही अर्थका आधारमा यसो भन्न सकिन्छ- दुमाजुजात्रा मात्र विश्वजात्रा होइन, विश्वजात्राभित्रकै एक उपजात्रा वा विधान दुमाजुजात्रा पनि हो ।

**(ख) मल्लकालमा राजा राजपरिवारका कुनै सदस्यको मृत्यु भएमा, कुनै कारणवश राजपूजा रोकिन गएमा पनि राष्ट्रिय महत्त्वका सांस्कृतिक जीवनमा चलेर आएका देवदेवीका जात्रा, पर्वपूजा विधान आदि चाहिँ यथावत् चल्दथ्यो भन्ने कुराको एउटा उदाहरण दुमाजुजात्राका प्रसङ्गमा ठ्यासफूको निम्न उदाहरणबाट [D.R.Regmi MEDIEVAL NEPAL PART III, Calcutta, AD 1966, pp. 104-5] पनि मिल्छ -"सं. ८५८ चैत्र शुक्ल ॥ सप्तमिया रात्रिस श्रीबाघमल्ल ठाकुलसिक... राजाजुकोचछिन्हिछि दुमाजुया छेस खेलस रूकना चोङ ... मेषसंक्रान्ति न्ह्यथुकुन्हु श्रीश्रीश्रीतलेजुसं स्याकोत्याको पूजायाक ... श्रीश्रीश्रीदुमाजुयायात यातका ॥ घत दानं वियकु ॥**

43 वैशाख महीनामा तीतो खानुपर्छ भनेर खाइने खाइसि, खाइब:सि फल तीतै हुन्छ । ज्वर निको पार्ने आयुर्वेदिक औषधिको रूपमा अहिले पनि प्रयुक्त हुँदै आएको खाइब:सिको गुणका बारेमा नेपाली बृहत् शब्दकोशमा (काठमाण्डौ, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, वि.सं. २०४०, पृष्ठ ९२७) यसरी वर्णन गरिएको छ- "... नपाक्ता हरिया र पाक्ता पहेँला हुने झुप्पा-झुप्पा परेको ससाना फल फल्ने ... आयुर्वेदमा कफ, कीरा, कुष्ठ र विषनाशक तथा ठण्डा गुण मानिएको एक जातको नीम महानीम्ब"

प्रत्येक महीनामा नयाँ र फरक-फरक स्वादका फलफूल, तरकारी र अन्न देवदेवीलाई अर्पण गरी प्रसादको रूपमा ग्रहण गर्ने चलन नेवार सांस्कृतिक जीवनमा अहिले पनि छ । यसो हुँदा दमाजुदेवीलाई खाइब:सि फलले फलाभिषेक गरी प्रसादको रूपमा ग्रहण गर्ने चलनले एकातिर वर्षदिनसम्मको रोग निको हुन्छ भने गहिरो जनविश्वास छ भने अर्कोतिर यस महीनामा तीतो खानुपर्छ भन्ने चलनलाई पनि पुष्टि गर्छ । अनि शायद यसैकारणले होला मेषसंक्रान्तिलाई खायु सल्हु पनि भनिन्छ । (मौलिक विचार साभार-विनोदराज शर्मा)

44 **कान्तिपुरको दुमाजुजात्राका प्रसङ्गमा घटदान गर्ने चर्चा माथि गएको ठ्यासफूको उद्धरणमा पनि परेको छ । यो चलन भक्तपुरमा पनि छ । यसको अतिरिक्त जोगिचक्र पूजा चलाई दर्शनधारीहरूलाई मूलचोकको स्नेहमण्डपमा भोजन ग्रहण गराउने सो मण्डपमा चैत्रमसान्त (कोलुक्यात) मा पनि बत्ती बाल्नुपर्ने आदि विधान राजा जगत्प्रकाश मल्लले थपि चलाएका रहेछन् भन्ने कुरा ने.स. ७८२ को अभिलेखबाट थाहा पाइन्छ । अभिलेखाँश यस्तो छ "नेपालमण्डले, ... श्रीश्री जयजगत्प्रकाशमल्लदेववर्मणा स्नेहमण्डपे दर्शनधारीभोज्यकरणार्थ... मेषसंक्रान्ति नेहु रिव जोगिचक्र याय... महानवमी कुन्हु, प्रसाद चवदश, क्वरुक्यात थ्व सोघातम मता छोयके ..." (भोलानाथ पौडेल - स्नेहमण्डप, पूर्णिमा, ७ पूणाङ्क, वि.सं. २०२२, पृष्ठ ४६)**

45 पुरुषोत्तमलोचन श्रेष्ठ-भक्तपुरमा तान्त्रिक शक्तिको युग, (विद्यावारिधि शोधग्रन्थ), काठमाण्डौ, त्रि.वि., केन्द्रीय इतिहास शिक्षण समिति, वि.सं. २०५०, पृष्ठ १७१

46 यसरी दुमाजुदेवीको जात्राका क्रममा यिनलाई मूगुठीका गुठीयारहरूले आफ्ना आगमगृहमा भित्र्याई पूजा गर्ने र त्यसपछि फिर्ति-सवारी गर्न विद्यापीठका आचारजुहरू (कर्माचार्य)का आगमगृहमा लैजाने चलनले यहाँनिर ठ्यासफूमा वर्णित सोही चलनको एक झलक "... देवगुठ कतकया, छेस विज्याचकाव, लितंहयाव, आचादया छेस विज्याचके..." (वज्राचार्य, ने.सं. ११०७, पत्र संख्या ५ (ख) लाई संझाइरहेको छ ।

47 यद्यपि उनी प्राण मल्लको विरूद्धमा जीत मल्ल र वरपरका सामन्तहरूलाई आफनो पक्षमा मिलाई भक्तपुरमा आफनो राजनैतिक धाक जमाउन पनि प्रयत्नशील थिए । भक्तपुर राजदरबारको मूलचोकको पश्चिमपट्टिको छानामा देखापर्ने ११ वटा गजूरमध्ये ५ वटा प्राण मल्लले र ६ वटा गजूर चाहिँ नरेन्द्रमल्लले ने.सं. ६६६ मा चढाएका थिए । यो कुरा ऐतिहासिक घटनावली (वज्राचार्य, ने.सं. ११०७, पौ ल्या २) को निम्न उद्धरणबाट मिल्छ-"संवत् ६६५ वैशाखकृष्ण द्वादशी रेवतीनक्षेत्र, आयुष्मानयोग वृहस्पतिवार, थ्वकुन्हु श्री ३ आगमम गजुलिछायादिवस, श्री२ जय प्राणमल्लदेवठाकुरस्य, अहोरात्र यज्ञयाङन पु५ गजुलि छाया या दिन ॥ ॥ संवत् ६६६ मार्ग्गशिरपूर्णिमा रोहिनी, सिद्धि, बुधवार श्री ३ आगमसके गजुलि षुपु ६ छाया दिवस श्री २ जयनरेन्द्रमल्लदेवठाकुरस्य, अहोरात्र यज्ञ याङन ॥ ॥"

48 (क) वज्राजार्य (२०३३, पृष्ठ १५३), (ख) कोइराला (२०४७, पृष्ठ ५), (ग) श्रेष्ठ (२०६०, पृष्ठ १८५)

वज्राचार्य (ऐजन, पृष्ठ १५३) ले दुमाजुदेवीको लक्ष्मी रूपमा हाँडिगाउँको अंशुवर्माको अभिलेखमा उल्लेखित श्रीदेवीलाई संझिन पुगेको छन् । तर पूर्वमध्यकालीन आगन्तुक देवी दुमाजुलाई उत्तरलिच्छविकालीन राजकीय श्रीदेवीसित दाँज्ने वा सो सदृश मान्ने

चित्तबुझ्दो आधार चाहिँ देखिएन । तैबिसेक ती श्रीदेवीले ता यहाँनिर दुमाजुलाई नभएर हाँडिगाउँके त्यसबखतकी मूल मानेश्वरी र परवर्तीकालका मल्लकालीन दरबार र त्यसका अनेक मुकाममा प्रतिष्ठापित हुनपुगेका इष्टदेवताकै रूपमा पूज्य तिनकै प्रतिरूप मानेश्वरीहरूलाई झल्झली संझाइरहेका छ । यसैकारण हालसम्म पनि भक्तपुर प्रत्येक वर्ष वैशाख शुदि ५ रोजमा बोका हाँससहित हाँडिगाउँको मानेश्वरीलाई इष्टदेवता मानेर देवालीपूजा पठाउने चलन छ । निःसन्देह यस सांस्कृतिक प्रमाणले पनि मूल मानेश्वरी मात्र नभएर उत्तरप्राचीनकालका दरबारसमेत हाँडिगाउँमा थियो भन्ने कुराको संकेत दिएको छ । त्यसरी नै गोपालराजबंशावलीमा (२१पत्र) राजा मानदेवले आफनो नामबाट प्रतिष्ठा गरेको मानेश्वरी यिनै हुन्, यसोहुँदा मानगृह पनि हाँडिगाउँमै थियो भन्ने कुरा समेत प्राकारान्तरमा बुझिन्छ । राजोचित श्री ले युक्त देवी लिच्छिवी राजाहरूका इष्टदेवता हुन् । (धनवज्र वज्राचार्य- लिच्छविकालका अभिलेख, काठमाण्डौ,नेपाल र एसियाली अनुसन्धान केन्द्र, वि.सं. २०३०, पृष्ठ ३०३) भन्ने कुरामा सन्देह छैन । तर एउटा मात्र श्री लाग्दैमा दुमाजुलाई श्रीदेवीसित दाँज्ने हो (वज्राचार्य, २०३३, पृष्ठ १५३) भने मल्लकालका अभिलेखका ता कुरै छाडौं, उत्तरप्राचीनकालदेखिको यो परम्परा दुमाजुमा मात्र नभएर मानेश्वरी र तलेजुमा दृष्टिगत हुन आउने कर्मकाण्डित प्रमाणबाट पनि जीवन्त रहँदै आएको कुराको पुष्टि मल्छ । उदाहरणका लागि मानेश्वरी, दुमाजु र तलेजु अनि पूजाका क्रममा तिनलाई आवाहन गरी बसालिने तिनका श्रीयन्त्रलाई लिन सकिन्छ । विचारणीय कुरा के छ भने यसमा एउटा मात्र श्री लागेको छ । दुमाजुमात्र नभएर मानेश्वरी र तलेजु पनि देवी नै हुन् । सम्बद्ध देवीको मूलस्थान श्रीयन्त्र हो । श्रीयन्त्रमा देवीलाई बसालीसकेपछि तिनको नाम ओझेलमा पर्न जान्छ एउटा मात्र श्री ले सम्बोधन गरिन्छ । यसर्थ दुमाजुमात्र नभएर मानेश्वरी र तलेजु पनि श्रीदेवी हुन् । (मौलिक विचार साभार-विनोदराज शर्मा)

49 मिश्रितरूपको प्रयोगात्मक तान्त्रिक धर्मको तन्त्रमय नेवार शाक्त-संसारमा सम्प्रदाय भेद ओझेलमा परी साझा महत्व र मान्यताका साथ एउटै देवदेवी पनि जुनसुकै रूपमा पनि मान्न पूजन सकिने जटिल प्रवाह निकै सफल र लोकप्रीय रहँदै आएको पाइन्छ । मल्लकालीन राजदरबारका उच्चतम देवदेवी लगायत भैरव, अष्टमातृका, नवदुर्गा आदि यस कुराको पुष्टिका लागि उदाहरणस्वरूप देखापर्छन् । आगमगृहको मूलस्थानमा श्रीयन्त्रमाथि प्रतिष्ठित श्री रूपि तलेजुभवानी द्वार, तोरण, टुँडाल र भित्ता आदिमा महीषमर्दिनी स्वरूपमा मात्र नभएर अनेक मुद्रा वर्ण र वाहनसहित देखापर्छिन् भने बडादशैताका तान्त्रिक बौद्धधर्मकी कन्याको शरीरमा प्रवेश गरी कहिले जीवित कुमारीकै रूप धारण गर्न पुग्छिन् भने कहिले हिन्दू बौद्ध दुबैले मान्ने जीवित नवदुर्गागणकै जीवन र मृत्युको मूल शक्तिका रूपमा देखापर्छिन् । त्यसरी नै दमाजुदेवी कुब्जिका, काली, लक्ष्मी आदि रूपमा मात्र नभएर विश्वजात्राका महाभैरवकै शक्ति भैरवी, भद्रकालीकै रूप धारण गर्नपग्छिन् । कोलुक्यात-रात्रिको कर्मकाण्डीय विधानमा दृष्टिगत हुनआउने तिनको एउटा स्वरूप मसानभैरवकै शक्ति मसानभैरवी पनि हो । यस कुराको कर्मकाण्डीय प्रमाण त्यस रातमा विधिवत् बालिने महादीप र घेरूवा दीप हुन् । अनि यिनै कुराका पनि थप पुरातात्विक पुष्टि दुमाजुचोकस्थित तिनका लिङ्गाकृति प्रतिमा र त्यसैको साथमा रहो गुह्यश्वरी गचाः नामक जलकुण्डबाट मिल्छ । संगैको भित्तामा चन्द्राकृत पनिछ । यसरी यी प्रमाणका प्रतीक अर्थमा शक्तिको प्राधान्यता रहेको यिनको शिवशक्तिमय स्वरूप समेत दर्शनीय हुन आइपुग्छ । यसै रूपको प्रतीक अर्थमा यहाँनिर पाँचतले मन्दिरभित्रकी कपालभैरव र मसानभैरवमाथि आसन गरेकी पंचमूखी सिद्धिलक्ष्मीको तान्त्रिक स्वरूपलाई पनि संझाइरहेको छ । सामान्यतया सिद्धिलक्ष्मी सर्वाम्नायिका देवी हुन् तापनि तिनको मूल स्वरूप पश्चिमाम्नाय हो । यसै आम्नाय अन्तर्गत पूजिने देवीहरूमा मानेश्वरी, तलेजुलगायत दुमाजु पनि हुन् । सामान्यतया पश्चिमाम्नायी-कुब्जिकाका पनि ३२ भेद देखापर्छन् । यताबाट यस आम्नायकै आधारमा पनि दुमाजुका अनेक रूप दृष्टिगत हुन्छन् ।

50 उदाहरणका लागि माथि उल्लेखित वर्षकृति ठ्यासफूमा यसका टिपोटकारले यस दिनमा सम्पन्न गर्नुपर्ने काम कुराको टिपोट गर्दा सो दिनलाई बुझाउन कुलुक्यात कुन्हु भनेका छन् भने त्यसरी नै भक्तपुरका राजा जगत्प्रकाश मल्लले मूलचोकको स्नेहमण्डपमा प्रत्येक वर्षको महानवमी, पिशाचचतुर्दशीका साथै यस दिनमा पनि बत्ती बल्नुपर्ने भन्ने सन्दर्भमा उनले पनि सो दिनलाई बुझाउन क्वरुक्यात थव सोघातस मता छोयके भनेका छन् ।

पौडेलले (२०२२, पृष्ठ ४७) क्वरुक्यात को अनुवाद विस्केटको दिन भनेर दिएका छन् । यताबाट उनी क्वरुक्यातको अर्थ खोज्दै बिस्केटसम्म पुगेतापनि यस जात्राको कुन दिन क्वरुक्यात हो भन्ने कुरा सो बिस्केटको दिनले निश्चित रूपमा खुल्दैन। किनकी बिस्केटको दिन एक दिन मात्र होइन, आठ रात र नौ दिन बिस्केटका दिन हुन् ।

51 विनोदराज शर्मा, सुरेन्द्रवीर कर्माचार्य र योगेशराजसित भएका छलफलका आधारमा ।

# विष्णुपादुकाका पुरातात्त्विक अवशेषहरू

**सोमप्रसाद खतिवडा**

*उपप्राध्यापक, संस्कृति स्नातकोत्तर क्याम्पस, विराटनगर*

## परिचय

नेपालका अनेकन पर्वत, खोला, नदी, कुण्ड आदि स्थान पवित्रक्षेत्रका रूपमा प्रख्यात रहेका छन् । त्यस्ता क्षेत्रलाई तीर्थ एवं पुण्यदायक स्थल मान्ने गरिन्छ । वास्तवमा तीर्थ त्यस्ता स्थानहरू हुन्, जुन स्थानमा गरिने धार्मिक कृत्यबाट मानिसले पापादीबाट मुक्त हुने सोच्तछ (गौड : २०५६, ६२०) । सामान्यतया इश्वरले क्रीडा गरेका तथा भक्त, महापुरुष र पतिव्रतास्त्री जन्मिएका, मरेका या उनीहरू बसोवास गरेका स्थानहरू तीर्थका रूपमा रहने गर्दछन् । (गोयन्दका : २०५६, ६०२) । तीर्थलाई तर्न सकिने स्थान (जैन : २०५६, ६३६), शास्त, गुरू, देव र उपाय (जैन : २०५६, ६३६), आदि नाम दिनुका साथै धर्म, काम र मोक्ष तीनवटा पुरुषार्थ प्राप्त गर्ने माध्यमका रूपमा समेत लिने गरिन्छ । त्यस्तै तार्न सक्ने एवं शुद्ध मानिने क्षेत्रलाई पवित्रस्थल मानिन्छ । पर्वत, नदी र कुण्डहरू देवताका वासस्थान मानिने हुनाले तिनीहरूलाई पवित्र स्थल मान्ने गरिएको हो । सामान्यतया पवित्र स्थलहरू धार्मिक महत्वका हुन्छन् र धार्मिक कृत्यहरू गरी आत्मशान्ति प्राप्त गर्ने, मनोकांक्षा पूरा गराउने, आफू र आफन्तको सुखसमृद्धि प्राप्त गर्ने, पितृतर्पण गर्ने तथा पुण्य कमाउने उद्देश्यबाट मानिसहरू त्यस्ता स्थलको भ्रमण गर्ने गर्दछन् । नेपालमा रहेका त्यस्ता अनेकन पवित्र स्थलमध्ये विष्णुपादुका पितृतर्पण गर्ने प्रमुख स्थलका रूपमा परिचित छ ।

## अवस्थिति

विष्णुपादुका सुनसरी जिल्लाको विष्णुपादुका गा.वि.स.को वडानम्बर ३ मा पर्दछ । यो स्थान धरानदेखि करीव पाँच किलोमिटर उत्तरपश्चिममा अवस्थित छ । भालढुङ्गा भञ्ज्याङ्को उत्तर तथा माछामाराको दक्षिण कोकाखोलाको पश्चिमी खोंचमा विष्णुपादुका स्थान पर्दछ । यस स्थानलाई बृहत्तर वराहक्षेत्रअन्तर्गतको एउटा महत्त्वपूर्ण तीर्थ मानिन्छ । सुनसरी र धनकुटा जिल्लाको सिमानामा यो स्थान समुद्रसतहदेखि करीव १५०० मिटरको उचाइमा अवस्थित छ ।

## बाटोघाटो

विष्णुपादुकामा यातायातको विकास हुन सकेको छैन । त्यहाँ पुग्ने कच्ची मोटरबाटो आजभन्दा केही वर्ष अगाडि नै खनिएको भए पनि त्यसको उचित मर्मत सम्भार हुने गरेको छैन । तसर्थ त्यहाँ पुग्ने एउटा मात्र उपाय पैदलयात्रा नै हो । धरानको उत्तरपश्चिम स्थित मङ्गलबारेबाट सर्दूखोला तरेर एउटा सानो खहरेखोला पछ्याउँदै उत्तर लागेपछि विष्णुपादुका भञ्ज्याङ्को दक्षिणीफेदीमा पुगिन्छ । त्यसपछि आधा घण्टाजति उकालो चढेपछि विष्णुपादुका भञ्ज्याङ् र त्यहाँबाट करीव पन्ध्र मिनट उत्तरपश्चिमतर्फ यात्रा गरी कोकाखोला तरेपछि विष्णुपादुकास्थान पुग्न सकिन्छ । वराहक्षेत्रबाट पनि कोकाखोलाको बगरैबगर विष्णुपादुका जाने बाटो छ । तर, त्यताबाट हिंड्दा कोकाखोलाका छहरा छाँगाहरू पनि पार गर्नुपर्ने भएबाट उक्त बाटोबाट विष्णुपादुका पुग्नु सजिलो छैन । यता चतराबाट सूर्यकुण्ड हुँदै भालढुङ्गा या विष्णुपादुका भञ्ज्याङ्को बाटोबाट पनि विष्णुपादुका पुग्न सकिन्छ । तर यी तीनवटा मध्ये विष्णुपादुका पुग्ने सबैभन्दा उपयुक्त पैदलमार्गचाहीं धरानबाट सर्दूखोला हुँदै जाने बाटो हो ।

## नाम

विष्णु हिन्दूहरूका वैदिकदेवता थिए । वेदहरूमा उनलाई विष्णु, सूर्य, सविता, मित्र र पुपणजस्ता पाँचवटा नाम (ऋग्वेद ३।६२।१०) दिइएका छन् । ऋग्वेदमा नै विष्णुलाई उरुगाय (जाँडो हिंड्ने), उरुक्रम (लामा पाइला चाल्ने) र त्रिविक्रम (तीन पाइला नाप्ने) मान्दै उनका तीन पाइलाको चर्चा गरिएको छ । तिनीहरूमध्ये पनि उनको परमपद आकाशमा उच्च स्थानमा रहने बताइएको पाइन्छ (तद्विष्णो : परमंपदं सदापश्यन्ति सूरय : । दिवीव चक्षुराततम् ॥ ऋग् १।२२।२०) विष्णुलाई वैदिककालमा पर्वतमा बस्ने (गिरिष्ठा), स्वतन्त्र रुपमा हिंड्ने (कुचर :), गाईको रुपमा (विष्णोर्गोपा अदाभ्य, ऋग्वेद १।२२।१८) र इन्द्रसँग सम्बन्ध भएका देवताका रुपमा लिने गरिन्थ्यो । यसरी ऋग्वैदिक कालमा नै विष्णुको परमपदको चर्चा पाइने हुनाले त्यसै समयदेखि उनका पादुका पूजाको शुरुवात भएको मान्न सकिन्छ । त्यसपछि शिवको लिङ्गपूजा गरेसरह विष्णुका पादुकापूजा गर्ने क्रम विकसित हुँदैगयो । ऐतरेयब्राह्मण (६।३।१५) मा विष्णु सम्पूर्ण लोक, वेद र वाणी नाप्ने देवताका रुपमा परिचित छन् । यसले पनि उनका पादुकापूजाको प्रारम्भिक अवस्था झल्काउने गर्दछ । शुरुशुरुमा उनलाई तीनपाइला नाप्ने देवता मान्ने गरिएकाले यसबाट उनका पादुकापूजा परम्पराले विकसित हुने मौका पाएको हो ।

विष्णुपादुकाको अर्थ विष्णुका पाउ भन्ने हुन्छ । त्यस्तै विष्णुका पादुका राखिएको तथा तिनीहरूको पूजाआजा गरिने स्थानलाई विष्णुपादुकातीर्थ भन्ने गरिन्छ । यता हिन्दूका धर्मग्रन्थहरूले विष्णुपादुकाको स्पष्टसँग नामोल्लेख तथा वर्णन गरेको देखिँदैन । हिन्दूपुराणहरूमा विष्णुपादुकाको बदलामा विष्णुपदतीर्थको चर्चा गरिएको पाइन्छ । यसैबाट पछि गएर विष्णुपादुकातीर्थको पनि कल्पना गरियो । विष्णुको वासस्थान स्वर्ग, उँचोस्थान र पर्वत मानिने हुनाले विष्णुपादुका स्थान पनि पर्वतमा रहनु पर्ने मान्यता राखियो । तसर्थ वराहक्षेत्रको पूर्वतर्फ पहाडमा रहेको विष्णुपादुकास्थान विष्णुको वासस्थानका रुपमा परिचित हुनपुग्यो । विभिन्न पुराणहरूले वराहविष्णु वराहक्षेत्रमा नित्यरुपमा बसोबास गर्ने उल्लेख गरेका हुनाले पनि वराहक्षेत्रभन्दा माथिको स्थान विष्णुपादुका मानिएको हो । साथै त्यस स्थानमा विष्णुका पाउका चिन्हहरू प्रस्तरमा कुँदिएका र खोपिएका पाइने हुनाले त्यसलाई विष्णुपादुका नामले परिचित गराइएको हो ।

## शास्त्रहरूमा विष्णुपादुका

विष्णुपादुका विष्णुले पितृको उद्धार गरेको स्थान भनिन्छ । त्यस स्थानमा विष्णुले पितृलाई तर्पणसमेत गरेको वर्णन पाइने हुनाले त्यसलाई तीर्थश्राद्धका लागि महत्त्वपूर्ण स्थान मानिन्छ । यस तीर्थको चर्चा सर्वप्रथम महाभारत महकाव्य (वनपर्व ८३। १०३ र १३०।८) मा गरिएको पाइन्छ । महाभारतको एक प्रसङ्गअनुसार कुरुक्षेत्रको लडाइँमा दिवङ्गत भएका आफन्तहरूका नाममा पाण्डवहरूले विष्णुपदतीर्थमा श्राद्ध गरेका थिए । तर यस ग्रन्थले विष्णुपादुकाको अवस्थिति स्पष्ट पारेको देखिँदैन भने त्यसको नाम पनि विष्णुपादुकाको बदलामा विष्णुपदतीर्थ दिएको छ ।

हिन्दूधर्म शास्त्रहरूमा विष्णुपद (ब्रह्माण्डपुराण २।१८।६७ र वायुपुराण ४७।६४), विष्णुतीर्थ (पद्मपुराण ६।१२९।५-३६ र वराहपुराण १४०।७१-७४), विष्णुधारा (वराहपुराण १४०।१७), विष्णुपदी एवं विष्णुसर (वराहपुराण १४०।२४ र १४७।४३) आदि विभिन्न नाम गरेका तीर्थहरूको चर्चा गरिएको पाइन्छ । तिनीहरू बृहत्तरवराहक्षेत्र आसपासका अलगअलग तीर्थहरू हुन् । तिनीहरूमध्ये विष्णुपद विष्णुपादुकाकै प्रारम्भिक नाम थियो, जुन नेपालको कोकामुख वराहक्षेत्र अन्तर्गतको एउटा तीर्थ मानिएको छ । वराहविष्णुले पृथ्वीलाई हिरण्याक्षको अधीनबाट छुट्कारा दिलाएपछि कोकाखोलामा पितृहरूको श्राद्ध गरेको विवरण पाइने हुनाले नै कोकाखोला छेउको तीर्थक्षेत्रलाई पितृश्राद्धका लागि उत्तम स्थान विष्णुपादुका मान्ने । गरिएको हो । हुन त भारतका विभिन्न भागमा पनि विष्णुपादुका स्थान रहेको वर्णन पाइन्छ । तर पनि पितृका उद्धारकर्ता देवता विष्णुका बासस्थान अग्ला पहाड नै हुने मानिन्छ । पुराणहरूका अनुसार पितृलोकबाट च्यूत भएका पितृहरूको उद्धार गरेको स्थान वराहक्षेत्र अन्तर्गतको कोकाखोलाक्षेत्र नै थियो ( ब्रह्मपुराण २१९।१-११९) । तसर्थ यसको समीपमा विष्णुपादुकातीर्थ रहनु स्वभाविक मानिन्छ । विष्णुले गरेको पितृहरूको उद्धारसम्बन्धी ब्रह्मपुराणमा पाइने एउटा कथाअनुसार कुनै समयमा वराहपर्वतमा भएको देवताहरूको सभामा पितृहरू र चन्द्रमाकी छोरी स्वधा पनि उपस्थित थिए । कथाअनुसार त्यस अवसरमा पितृ र स्वधाका बीचमा प्रेम भई विवाह समेत हुनपुग्यो । त्यसपछि पितृहरूले स्वधालाई आफ्नी पत्नीका रुपमा कोका नाम दिएका थिए । यता स्वधाले पितृहरूसँग पिताको स्वीकृति बेगर नै विवाह गरेकी थिइन् । यसबाट रिसाएर चन्द्रमाले उनलाई नदी भएर बग्ने श्राप दिए । यता चन्द्रमाले पितृहरूलाई पनि पितृलोकबाट च्यूत भएर रहनुपर्ने श्राप दिएका थिए । उनको त्यसपछि पितृलोकबाट च्यूत भएका तथा कोकाको खोजीमा भोकैप्यासै भौंतारिएका पितृहरू पर्वतले फलाइदिएको बयर खाएर त्यसै क्षेत्रमा जीवन बिताउन लागेका थिए । त्यसै अवसरमा उनीहरूले राक्षसहरूको आतङ्कको पनि सामना गर्नु परेको थियो । कथाअनुसार कोकाले राक्षसहरूको प्रकोपबाट बचाउन पितृलाई बाढीले छोपिदिइन् । यसबाट

उनीहरू कोकाको पानीभित्र भोकैप्यासै रहन बाध्य भए । आफ्नी प्रेमिका स्वधालाई देख्न नसकी पानीभित्र छोपिएका पितृको विष्णुले उद्धार गरी कोकाखोलाछेउमा श्राद्धसमेत गरेको र पितृलोक पठाएको कथा पाइन्छ । यसरी विष्णुले पितृहरूको उद्धार गरेको स्थानका रुपमा कोकाखोला पितृश्राद्धका लागि उत्तमस्थान मानिएको हो ।

वराहपुराणले पनि विष्णुपादुकालाई विष्णुपद नाम दिँदै उक्त स्थान कोकामुखछेउमा नै रहेको उल्लेख गरेको छ ।

*तत्र विष्णुपदं नाम स्थानं कोकामुखाश्रितम् ।*
*पश्यते परमां मूर्ति मेतां मम न संशय, (वराहपुराण १४०।२३) ।*

यस पुराणले कोकामुख, विष्णुधारा, धेनुवट, चन्द्रकुण्ड, विष्णुसरोवर, तुङ्गकुट, अनित्याश्रम, अग्निसर, ब्रह्मसरोवर, कोटीवट, धर्मोद्भव, यमव्यसनक, मातङ्ग, बज्रभव, शक्ररुद्र, द्रष्ट्राङ्कुर, मत्स्यशिला आदि तीर्थहरू विष्णुपादुकाको आसपासमा रहेको उल्लेख गरेको छ । यसरी विभिन्न धर्मशास्त्रका ग्रन्थहरूले कोकामुख वराहक्षेत्रको समीपमा नै विष्णुपादुकातीर्थ अवस्थित रहेको स्पष्ट पार्दै त्यस स्थानमा पुण्यकर्म गर्दा प्राप्तहुने फलका बारेमा समेत चर्चा गरेका छन् ।

**विष्णुपादुकाको खोजी**

आजभन्दा करीव नब्बे वर्ष अगाडिसम्म कोकाकोशीसङ्गमा छेउको विष्णुपादुकातीर्थ पत्ता लागेको थिएन । तसर्थ भारतका काशी र अन्य स्थानहरूमा विष्णुपादुकातीर्थ रहेको मान्यता राखिएको थियो । तर पछि गएर उक्त स्थान कोकाखोला छेउमा पर्ने कुरा विभिन्न पुराणहरूका आधारमा पत्ता लगाइएकाले कोकामुख वराहक्षेत्र समीपको विष्णुपादुकालाई नै विभिन्न धर्मग्रन्थहरूमा पितृश्राद्ध गर्ने चलन चलाइएको हो । यता कोकामुख वराहक्षेत्रमा अस्तुक्षेपण र पितृश्राद्ध गर्ने परम्पराचाहिं धेरै पहिलेदेखि नै चलिआएको थियो । तर विष्णुपादुकाको तीर्थश्राद्धका लागि हजारौं नेपालीहरू बर्सेनिजसो भारततिर जाने गर्दथे । सम्भवत: मध्यकालतिर विष्णुपादुकाको मन्दिर ब्रह्मशिलाभन्दा करीव ५० मिटर दक्षिणपश्चिममा कोकाखोलाको बगरमा नै थियो भन्ने अनुमान छ । कालान्तरमा त्यसलाई कोकाको बाढीले बगाएर लगेकाले त्यसको अस्तित्व समाप्त भएको हुनसक्तछ । मध्यकालमा उक्तक्षेत्रमा विष्णुपादुका मन्दिर रहेको अनुमान त्यहाँको भौगोलिक स्वरुपका आधारमा गरिएको हो । ब्रह्मशिलादक्षिणदेखि करीव तीन किलोमिटरजति भागमा कोकाको पानी जमीनमुनि दबेर बगेको छ । यस्ता स्थान पितृश्राद्धका लागि उपयुक्त मानिने हुनाले पनि विष्णुपादुकामन्दिर त्यसको समीपमा रहेको अनुमान गरिएको हो । उक्त मन्दिर आजभन्दा दुईतीन सय वर्षपहिलेतिर नासिएको हुनसक्तछ । तत्काल यसको ख्याति धेरै नबढेको र त्यस वरपर बसोबास गर्ने मानिसहरू तराईको फाँटतिर बसाई सरेकाले मानिसहरूले त्यस स्थानलाई भुल्दैगए र यसको अस्तित्व पनि समाप्त भएर गयो । यसै कारणले गर्दा विष्णुपादुका अज्ञात अवस्थामा पुगेको हुन सक्तछ ।

विष्णुपादुका अज्ञात अवस्थामा रहेकै समयमा वि.सं. १९७० सालमा वर्तमानका विष्णुपादुकामन्दिर छेउमा गएको पहिरोमा स्थानीय धामी लक्ष्मण तामाङ्गले प्रस्तरमा कुँदिएका एकजोडी पाउआकृति प्राप्त गरे । तिनीहरूलाई उनले तन्त्रमन्त्र र धुपधुवार गरेर एउटा ओडारमा राखी तान्त्रिक पद्धतिबाट पूजाआजा गर्नलागे । उनले विभिन्न दैवीय बिपत्तिबाट गाउँ र गाउँलेलाई जोगाउने मनसायबाट तिनीहरूलाई पूजाआजा गर्ने लागेका थिए । उनलाई उक्त स्थान पुराणहरूमा वर्णित विष्णुपादुका नै भएको कुरा थाहा नभए पनि यसबाट विष्णुपादुकाको खोजी गर्नचाहीं मार्गप्रशस्त हुनपुग्यो । तर पनि लामो समयसम्म कसैले पनि यस स्थानसम्बन्धी चासो राखेको देखिदैन ।

विष्णुका पाउआकृति कोका, विष्णुधारा र शंखधाराको छेउको त्रिवेणीमा आजभन्दा करीव नब्बे वर्ष पहिले नै पाइएका थिए । तर त्यसको धेरै पछिमात्र यस स्थानको विकास र प्रचारप्रसारमा चासो राख्न लागियो । सर्वप्रथम वि.सं. २०३६ सालमा धरानका केही जागरुकहरूले विष्णुपादुकामा टिनको छाना भएको एउटा सानो मन्दिर स्थापना गराए र प्रस्तर पादुकालाई मन्दिरमा राखेका थिए । त्यहाँको मन्दिर निर्माणमा धरानका कर्णबहादुर रहेको छ । यसैक्रममा वि.सं. २०४७ सालमा विष्णुपादुका मन्दिरको बरण्डा निर्माण गर्ने तथा २०५४।५५ सालमा पक्की मन्दिर निर्माण गर्ने कार्य भयो । यसबाट विष्णुपादुकाको प्रचारप्रसार द्रुत गतिमा हुँदैगयो । यता धरानका पथिककवि लक्ष्मी आचार्यले वि.सं. २०३० सालतिर नै ब्रह्म र वराहपुराणबाट वराहक्षेत्र कोकामुख महात्म्य प्रकाशित गरेर यस स्थानको प्रचारप्रसारगर्न लागेका थिए । वि.सं. २०४१ सालदेखि लक्ष्मी आचार्य र मान वज्राचार्यले नेपालका विभिन्न भागमा पुगेर प्रवचन मार्फत पनि यस स्थानको पौराणिक महत्व प्रचारप्रसार गर्नलागे । यसै क्रममा कविमान वज्राचार्यले विष्णुपादुका श्राद्धविधि तयार पारे । साथै वराहक्षेत्रदेखि विष्णुपादुकासम्म विभिन्न पाँच स्थान र धरानको पिण्डेश्वर बाबाधाम सरस्वतीकुण्डमा एक गरी छ स्थानमा छ प्रकारका तीर्थश्राद्ध गर्नुपर्ने नियम बसाए । यसबाट विष्णुपादुका तीर्थश्राद्धको प्रचारप्रसार हुँदैगयो र नेपाल र भारतका विभिन्न स्थानका मानिसहरू तीर्थश्राद्धका लागि यस स्थानमा आउन लागे । विशेषगरी पुसेऔंसीका दिन विष्णुपादुकामा तीर्थश्राद्ध गर्ने मानिसहरूको जमघट हुने गर्दछ । आजकल सोह्रश्राद्धका

अवसरमा पनि विष्णुपादुकामा पितृश्राद्धगर्ने चलन छ। यसबाहेक वर्षका अन्य अवसरहरूमा चाहीं विष्णुपादुका सुनसान रहने गर्दछ।

### बाटोघाटो

विष्णुपादुका वरपरका क्षेत्रमा प्रागैतिहासिक कालदेखि नै मानिसहरूको बसोबास रहेको थियो। विष्णुपादुकादेखि पाँच किलोमिटर पश्चिमको चक्रतीर्थमा प्राप्त नवपाषाणकालीन प्रस्तर उपकरणले उक्त कुरालाई स्पष्ट पारेको छ। प्राचीन र मध्यकालमा पनि विष्णुपादुकाको आसपासका क्षेत्रमा मानिसहरूको बसोबास रहेको थियो। तर आजभन्दा करीव दुईतीन सय वर्ष पहिलेतिर त्यस भेगका मानिसहरू तराइको फाँटतिर बसाइँ सरेर गएकाले विष्णुपादका निर्जन हुँदैगयो। पछि पुन: भोजपुर र धनकुटाका विभिन्न स्थानबाट केही मानिसहरू यस स्थानमा आएर बसोबास गर्न लागे।

विष्णुपादुका कोकाखोलाको खोंचमा रहेकाले र त्यताबाट अन्यत्र जानेआउने बाटोघाटो पनि नभएकाले त्यहाँ मानवको बस्ति ज्यादै पातलो छ। विष्णुपादुकामन्दिर पनि निर्जन स्थानमा रहेको छ। त्यस मन्दिरको पश्चिमतिर केही पर आठवटा घरहरू बनेका देखिन्छन्। त्यस्तै विष्णुपादुकाको करीव दुई किलोमिटर पश्चिममा पर्ने विष्णुपादुका भञ्ज्याङमा तथा भालढुङ्गामा चाहीं मानिसहरूको केही बाक्लो बस्ती रहेको छ। विष्णुपादुकामन्दिरदेखि उत्तरपश्चिममा पर्ने धनकुटाको आहाले गा.वि.स.मा पनि मानवबस्ती मात्रामा मगर र क्षेत्रीहरूको पनि बसोबास रहेको छ।

### पुरातात्त्विक अवशेषहरू

विष्णुपादुकामा हाल एउटा मन्दिर, एक दर्जनजति मूर्तिहरू, चौधबटा पाटी एउटा गुम्बा, केही घण्टीहरू र केही प्रस्तरअवशेषहरू रहेका छन्। तर त्यहाँका केही प्राकृतिक प्रस्तर र प्रस्तरमूर्ति बाहेकका कलात्मक वस्तु वि.सं. २०४० सालभन्दा पछाडि निर्माण भएका हुनाले पुरातात्त्विक दृष्टिले तिनीहरू त्यति महत्त्वपूर्ण देखिँदैनन्। त्यहाँ मध्यकालतिर निर्माण भएका मानिने कलात्मक वस्तुहरू नगन्यमात्रामा पाइएका छन्। विष्णुपादुकामा मध्यकालतिर नै सामान्य स्वरुपको मन्दिर पनि निर्माण भएको हुन सक्तछ। तर हालसम्म पनि त्यसका भग्नावशेष पाउन नसकिएकाले तत्कालको विष्णुपादुकाको अवस्थितिका सम्बन्धमा समेत प्रश्नचिन्ह लागेको छ। साथै अन्यत्रबाटै केही मूर्तिहरू त्यस स्थानमा लगेर राखिएका हुनसक्ने पनि अनुमान गर्न सकिन्छ। यता वर्तमानमा विष्णुपादुका मन्दिरको छेउछाउमा केही मूर्तिहरू जमीन खन्दा पाइने हुनाले मध्यकालतिर त्यसको आसपासमा नै उक्त मन्दिर रहेको अनुमान गर्न सकिन्छ। हालसम्म पनि त्यस भेगमा कुनै पनि प्रकारका अभिलेखहरूचाहीं प्राप्त भएका छैनन्। विष्णुपादुकामा रहेका प्रमुख पुरातात्त्विक अवशेषहरू निम्नानुसारका छन्।

#### १. विष्णुपादुकामन्दिर

विष्णुपादुकास्थानको विष्णुका पाउहरू राखिएको एउटामात्र मन्दिरलाई विष्णुपादुकामन्दिर भन्ने गरिन्छ। त्यस भेगमा प्राप्त हुने सम्पूर्ण कलात्मक वस्तुहरू त्यसै मन्दिरभित्र राखिएका छन्। यो मन्दिर कोका, विष्णुधारा र शंखधाराको त्रिवेणीदेखि पश्चिमतिर कोकाकिनारमा निर्माण गरिएको छ। उक्त मन्दिर सर्वप्रथम वि.सं. २०३६ सालमा निर्माण गरिएको हो। प्रारम्भमा त्यो मन्दिर टिनको छाना हालेर सामान्य रुपमा निर्माण गरिएको थियो। पछि वि.सं. २०४७ सालमा त्यसको परिपरि प्रदक्षिणापथका रुपमा वरण्डा निकालेर टिनको छाना हालियो। यसै क्रममा वि.सं. २०५७/५८ सालमा त्यसलाई शिखरशैलीमा पुनर्निर्माण गरिएको छ।

विष्णुपादुकामन्दिर सिमेन्टको प्रयोग गरी शिखरशैलीमा निर्मित छ। यसको शिखर जमीनको सतहदेखि करीव पच्चीस फिट उचा छ। मन्दिरको बरण्डा पनि पक्की नै बनाइएको छ, जसले दवताको प्रदक्षिणापथको काम गरेको देखिन्छ। यस मन्दिरको शिखरको माथिल्लो भागमा करीव पचास किलोग्राम तौलको पित्तलको गजूर हालिएको छ।

कलाकृतिका दृष्टिले खासै महत्त्व नझल्काउने विष्णुपादुका मन्दिर जमीनको सतहदेखि करीव एक फिट अग्लो पेटीमाथि निर्माण गरिएको छ। यसको गर्भगृह ९×९ वर्गफिटको छ। गर्भको पूर्व र पश्चिमतिर एकएकवटा काठका ढोका र दक्षिणतिर काठकै एउटा सानो झ्याल निर्माण गरिएका छन्। गर्भको उत्तरी भित्तामा पूर्वपश्चिम एउटा चौका उठाएर त्यसमाथि विभिन्न प्रकारका मूर्तिहरू राखिएका देखिन्छन्।

#### २. पाटीहरू

विष्णुपादुकामा जम्मा चौधवटा पाटीहरू छन्। तिनीहरू छवटा मन्दिरछेउमा र आठवटा कोकाखोलाको बगरमा पर्दछन्। त्यहाँका सबै पाटीहरू साना र सुविधाविहीन छन्। तिनीहरू तीनतिर पर्खाल लगाएर एकातिर खुल्ला छाडिएका तथा छानाचाहीँ टिनले छाएर निर्माण गरिएका देखिन्छन्। विष्णुपादुकाका पाटीहरूमा भाँडाबर्तन, आवास, शौचालय आदिको अभाव रहेको छ। वि.सं. २०४० सालभन्दा पछाडिमात्र निर्माण गरिएका ती पाटीहरू कलाका दृष्टिले पनि महत्त्वपूर्ण देखिँदैनन्।

#### ३. गुम्बा

विष्णुपादुका मन्दिर छेउमा एउटा सामान्य प्रकारको गुम्बा छ, जुन त्यहाँका पुजारी चतुर्मान तामाङले निर्माण गराएका

हुन् । एक तलाको टिनको छाना हालेर निर्माण गरिएको उक्त गुम्बा वि.सं. २०५३ सालमा निर्माण गरिएको हो। त्यसमा शाक्यमुनी बुद्धका चित्रहरू राखिएका छन् र त्यसको पूजाआजा तिब्बती लामा बौद्धधर्म परम्पराअनुरूप हुने गर्दछ। उक्त गुम्बा पनि कलाका दृष्टिले महत्वपूर्ण देखिदैन ।

### ४. मूर्तिहरू

विष्णुपादुकामा विष्णुका पाउको पूजा हुने गर्दछ । तसर्थ त्यहाँका प्रमुख कलात्मक वस्तुमा विष्णुका पाउआकृति नै पर्दछन् । यसवाहेक विष्णुमूर्तिको भग्न पाउखण्ड, पाञ्चायनदेवताका प्रतीक र अन्य केही मूर्तिहरू पनि प्राप्त भएका छन् । त्यहाँ प्राप्त प्रमुख मूर्तिहरू निम्नानुसारका छन् ।

क. **प्रस्तर पाउआकृति** : विष्णुपादुकामा खोपिएका एक कुँदिएका दुई गरी जम्मा तीनजोडी पाउआकृतिहरू रहेका छन् । त्यहाँ प्राप्त प्रस्तरबाट निर्मित दुईजोडी पादुकालाई विष्णु र लक्ष्मीका पाउ तथा तेश्रो जोडीलाई विष्णुका खराउ मानिन्छ । तिनीहरूमध्ये प्रथम जोडी १७"×९" आकारको फलकमा खोपिएका छन् । त्यसमा दुवै पाउ ६" लम्बा देखिन्छन् । कलाका दृष्टिले कुनै पनि प्रकारको महत्व नभएका ती आकृति वि.सं. १९७० सालमा लक्ष्मण तामाङले पहिरोमा प्राप्त गरेको बताइन्छ । त्यस्तै दोश्रो जोडी पादुका ९"×७" को प्रस्तरफलकमा कुँदिएका छन्, जसको लम्बाइ ३" छ । ती पादुकाहरू वि.सं. २०३६ सालमा मन्दिरको जग खन्दा पाइएका थिए । तिनीहरूलाई लक्ष्मीका पादुका मानेर पूजाआजा गर्ने गरिन्छ । उक्त मन्दिरमा राखिएका तेश्रो जोडी पाउआकृतिलाई विष्णुका खराउ मानेर पूजाआजा गर्ने चलन छ । तिनीहरूको लम्बाई ५" र चौडाईचाहिं २" छ ।

ख. **खण्डित मूर्तिको अवशेष** : विष्णुपादुका मन्दिरभित्र एउटा प्रस्तरमूर्तिको पाउतिरको खण्डित भाग राखिएको छ । पिंडौलादेखि तल्लो भागमात्र रहेको उक्त अवशेपलाई विष्णुको मूर्तिको अवशेप मानिन्छ । उक्त मूर्तिको अवशेपमा पाउको दुवैतिर अस्पष्ट रुपका एकएकवटा स्त्री र पुरुपका आकृति देखिने हुनाले तिनीहरूलाई गरुड र लक्ष्मीका आकृति मान्दै उक्त अवशेपलाई विष्णुमूर्तिको अवशेप मान्ने गरिएको हो । कालो प्रस्तरमा कुँदिएको उक्त मूर्तिको अवशेप प्रस्तर छनौट र खोपाइका आधारमा सेनकालतिर निर्माण भएको हुनसक्ने अनुमान छ । तसर्थ त्यसलाई पनि विष्णुपादुकाको महत्वपूर्ण अवशेप मान्ने गरिन्छ । त्यसको निर्माण कम्तिमा पनि चौधौंपन्धौं शताब्दीतिर भएको हुन सक्तछ ।

ग. **पाञ्चायनदेवता** : पाञ्चायन देवतामा शिव, गणेश, लक्ष्मी, देवी र विष्णु पर्दछन् । तिनीहरू अलगअलग मतानुसार अलगअलग महत्वका साथमा पूजाआजा गरिन्छन् । विष्णुपादुका मन्दिरभित्र देवप्रतिमा राख्ने आसनको सवैभन्दा पश्चिमी भागमा पाञ्चायन देवताका प्रतीकहरू राखिएका छन् । विष्णुपादुका वैष्णवतीर्थ भएकाले त्यहाँ विष्णुपाञ्चायनको नित्य पूजा हुने गर्दछ । तसर्थ त्यहाँका पाञ्चायन देवतालाई विष्णुपाञ्चायन मान्ने गरिन्छ ।

घ. **अन्य मूर्तिहरू** : विष्णुपादुकामन्दिरमा विभिन्न समयमा बनेका पाँचवटा सादा शिवलिङ्ग पनि राखिएका छन् । तिनीहरू सामान्य, भद्दा र कम आकर्पक छन्, जुन धेरै प्राचीनचाहीं होइनन् । यसबाहेक विष्णुपादुकामा अन्य प्रकारका प्रस्तरमूर्तिहरू ज्यादै कम संख्यामा पाइने गर्दछन् ।

ङ. **घण्टीहरू** : विष्णुपादुका मन्दिरमा जम्मा पाँचवटा घण्टीहरू झुण्ड्याइएका देखिन्छन् । तिनीहरूमध्ये सवैभन्दा ठूलो घण्टी बीस किलोग्राम तौलको छ । उक्त घण्टी वि.सं. २०५७ सालमा जयबहादुर लिम्बूको स्मरणमा उनका श्रीमती र छोराहरूले राखिएका हुन् । त्यस बाहेकका अन्य घण्टी ज्यादै साना र बीस वर्पभन्दा कम पुराना छन् । तिनीहरूमा अभिलेखको पनि अभाव छ ।

च. **ब्रह्मशिला** : विष्णुपादुका मन्दिरको दक्षिणतिर कोकाखोलाको किनारामा एउटा सेतो विशाल प्रस्तर रहेको छ । त्यसलाई ब्रह्मशिला भन्ने गरिन्छ । ब्रह्मशिलामा मान्छे सुतेर बनेसरहको मानवपिठ्यूँको डोबको आकृति बनेको देखिन्छ । त्यसलाई हिरण्याक्षको वध गरी सुतेका विष्णुको पिठ्यूँको शिलाछाप हो भन्ने पौराणिक मान्यता राखिन्छ । करिव चारसय स्क्वायरफिटको गोलो एवं सेतो रङको उक्त विशाल प्रस्तरलाई विष्णु नै मानेर पूजाआजा गर्ने चलन छ ।

छ. **अन्य प्रस्तरहरू** : विष्णुपादुका मन्दिरको पूर्वतिर कोकाखोलाको किनारमा एउटा कालो प्रस्तर रहेको छ, जसलाई यज्ञवराहको प्रतीक मानिन्छ । कोकाखोलातिर नै फर्किएर रहेको उक्त प्रस्तर प्राकृतिक शिला हो । यसैगरी कोका, विष्णुधारा र शंखधाराको सङ्गमस्थलमा

नै रातो रङको एउटा ठूलो प्राकृतिक प्रस्तर पनि छ। त्यसलाई चाहीं यज्ञवराहले हिरण्याक्षलाई बध गर्न प्रयोग गरेको प्रस्तर मानिन्छ। यसका साथै विष्णुपादुका वरपरका प्रायः सबैप्रकारका वस्तुहरूलाई धार्मिक महत्त्व दिएर पूजाआजा गर्ने चलन छ।

## निश्कर्ष एवं सारांश

विष्णुपादुका बृहत्तर वराहक्षेत्रअन्तर्गत पर्ने एउटा तीर्थ हो। कोकाखोलाको किनारी भागमा रहेको उक्त स्थान तीर्थश्राद्धका लागि निकै प्रख्यात छ। त्यहाँ तीर्थश्राद्धका लागि मानिसहरूको ठूलो जमघट हुने अवसर पुसेऔंसी हो। यसबाहेक सोह्रश्राद्धका अवसरमा पनि केही मानिसहरू तीर्थश्राद्धका लागि विष्णुपादुकामा जाने गर्दछन्। यी दुईवटा अवसरबाहेक विष्णुपादुकामा अन्यत्रका मानिसहरू कम मात्रामा मात्र पुग्ने गर्दछन्। आजभन्दा करीब बीस वर्ष अगाडिदेखि मात्र त्यस स्थानको प्रचारप्रसार भएको भए पनि छोटो समयमा नै यसको ख्याति अत्यधिकमात्रामा बढेर गएकाले बर्सेनी लाखौं मानिसहरू विष्णुपादुकामा तीर्थमा हुनुपर्ने भौतिक सुविधाहरूको अभाव रहेको छ। एकपटक धरानदेखि विष्णुपादकासम्म कच्ची मोटरबाटो खनिएको भए पनि त्यसको मर्मतसम्भारको अभावमा विष्णुपादुकासम्म पुग्न धरानदखि पैदलै यात्रा गर्नुपर्ने बाध्यता रहेको छ।

विष्णुपादुका छेउछाउमा थुप्रै तीर्थहरू रहेकाले र त्यो स्थान बृहत्तर बराहक्षेत्र अन्तर्गत पर्ने हुनाले त्यस स्थानसम्म पुग्न मोटरबाटोको व्यवस्था गरेकोखण्डमा मात्र पनि त्यसलाई एउटा महत्वपूर्ण तीर्थका रुपमा विकास गर्न सकिने सम्भावना छ। त्यस स्थानमा पर्यटनको विकासका सम्भावनाहरू पनि प्रशस्तमात्रामा रहेका छन्। तसर्थ त्यहाँ यातायात, आवास, शान्ति सुरक्षा आदिको समुचित रूपमा व्यवस्था मिलाइएको खण्डमा त्यस स्थानलाई नेपालकै एक महत्त्वपूर्ण पर्यटकीय क्षेत्रका रुपमा विकास गर्न सकिने देखिन्छ।

## सन्दर्भग्रन्थसूची


**अमरकोश**, वाराणसी : चौखम्बा संस्कृत सिरिज, १९५७।

आचार्य, लक्ष्मी, **वराहक्षेत्रकोकामहात्म्य**, धरान : लक्ष्मी साहित्य प्रकाशन, २०३८।

आचार्य, तारणिश झा (टी.), **ब्रह्मपुराण**. प्रयाग : हिन्दी साहित्य सम्मेलन, १९७६।

आनन्दस्वरुप गुप्ता (सं.), **श्रीवराहपुराणम्**, वाराणसी : सर्वभारतीय काशीराजन्यास, १९८५।

काणे, पी.भी., **हिष्ट्री अफ् धर्मशास्त्र** भोल १-५, (तृतीय सं.), (अनु अर्जुनचौवे कश्यप), लखनउ : उत्तरप्रदेश हिन्दी संस्थान, १९९४।

दत्तशास्त्री, रामनारायण (सं.), **महाभारत खण्ड-२**, गोरखपुर : गीताप्रेस,२०१२।

दास, श्यामसुन्दर, **हिन्दी शब्दसागर भाग-८**, वाराणसी : शम्भुनाथ बाजपेयी, १९७२।

पाण्डे, राजबलि, **हिन्दू धर्मकोश**, लखनउ : उत्तरप्रदेश हिन्दीसंस्थान, १९८८।

पोद्दार, हनुमानप्रसाद (सं.), **कल्याण तीर्थाङ्क**, पाँचौं सं., गोरखपुर : गीताप्रेस, २०५६, पृ. ६०२, ६२० र ६३६।

म्याक्डोनाल, ए.ए. र कीथ, ए.ए., वैदिक इन्डेक्स अफ् नेम एण्ड **सब्जेक्ट्स्**, भोल-२ दिल्ली, मोतीलाल बनारसी दास १९६७।

शर्मा, राणाप्रसाद, **पौराणिक कोश**, दोश्रो सं. वाराणसी : ज्ञानमण्डल लिमिटेड, १९८६।

श्री श्रीविष्णुपुराणम्, गोरखपुर : गीताप्रेस, २०२४।

**श्रीपद्मपुराणम्** पुण्याख्यपत्तने : आनन्दश्रम मुद्रणालये, १८९४।

सरस्वती, दयानन्द (टी.), ऋग्वेद, नयाँदिल्ली : दयानन्द संस्थान, २०३०।

स्याल्टो र आर. एन., द **इन्साइक्लोपेडिया अफ् इन्डियन कल्चर**, भोल भी-जेड्। नयाँदिल्ली : स्टर्लिङ पब्लिसिङ्ग हाउस, १९८५।




पुसेऔंसीका दिन तीर्थयात्रीहरू विष्णुपादुकामा तीर्थश्राद्धगर्न न्यस्त खोलाहरू बायाँदेखि क्रमशः कोका, विष्णुधारा र शंखधारा। यी त्रिश्रोतमा रहेको विष्णुपादुका तीर्थ



विष्णुधारा, शंखधारा र कोकाखोलासँगको विष्णुपादुका तीर्थ छेउमा देखिने विष्णुपादुका मन्दिर

# पुरातत्त्व विभागका गतिविधि आ.व. ०५९।६०

**विष्णुराज काकी**
**जयन्ती श्रेष्ठ**

अधिराज्य भरी छरिएर रहेका मूर्त एवं अमूर्त सम्पदाहरुको खोज एवं अनुसन्धान गरी तिनको महत्व र भौतिक अवस्थाको आधारमा संरक्षण तथा सम्वर्द्धन गर्ने कानूनी दायित्व यस विभागले आफ्नो स्थापनाकालदेखि नै तिनको जगेर्ना गर्ने कार्य गर्दै आएको छ । हाम्रा पूर्वजद्वारा सिर्जिएका यी सम्पदाहरुको अस्तित्व संरक्षण गरी भावि सन्ततिका लागि हस्तान्तरण गर्नु आजको आवश्यकता हो । यसका माध्यमवाट विगतका शीप र जाँगर लोकका सामु उजागर गरी भविष्यलाई मार्ग दर्शन गराउन सकिन्छ । समाज परिवर्तनशील भएकाले यसको वेग निरन्तर परिवर्तन गामी हुँदा प्राचीन परम्परागत संस्कृतिका वारेमा ज्ञान दिलाई तिनको आवश्यकता र जर्गेना गराउने तर्फको प्रवाहमा सम्मिलित गराउने कार्य कठिन मात्र होइन ज्यादै असंभव जस्तो देखिन्छ । यस प्रयासलाई आत्मसम्मान स्थितिमा पुऱ्याउन निरन्तर लागि रहनु पर्ने र परिवर्तनशील परम्पराहरुलाई पनि अंगिकार गर्दै जानु पर्ने देखिन्छ । सिर्जित परम्परा, जीवन शैली र सामाजिक परिवेश एवं मूल्य र मान्यताहरुले वर्तमान र भविष्यहरुलाई पनि निर्दिष्ट गर्न सक्छ भन्ने भावना जगाउने कार्यमा निरन्तर प्रयास गर्नु पर्ने देखिन्छ । यी दुई पिंढिको बीचको द्वन्द्वलाई सामाञ्जस्यता कायम गरी निरन्तरता दिनु पुरातत्व विभागको कार्य क्षेत्र हो । यस कार्यका लागि यस विभागले राष्ट्रका सवै जात, जाति, समुदाय र सवै वर्गलाई समेटने प्रयास गर्दै आएको छ । ५१ वर्षको लामो जीवन यात्रामा यस विभागले आफ्ना सीमित श्रोत र साधनका वावजूद पनि महत्वपूर्ण सफलता हासिल गर्न सक्षम रहेको छ ।

नेपालको प्राग ऐतिहासिक थुप्रै सामाग्रीहरु खोज तथा अनुसन्धान, पिक्टोग्राफी -चित्रलिपि) पहिचान एंव प्रकाशन, नवौं शताव्दी देखिका सांस्कृतिक एंव आर्थिक जीवनका कृयाकलापहरुको अनुसन्धान गरी प्रकाशनमा ल्याई सकेको छ । गत वर्षको उत्खनन् अनुसन्धानका आधारमा रामग्रामको स्तूपको अन्तिम निष्कर्षमा पुग्न सफल भएको छ भने, किचकवधको उत्खनन् कार्यले पूर्वान्चलको इतिहासलाई नयाँ मोड दिन सक्ने आधारहरु देखा परिसकेका छन् । पुरातात्विक अनुसन्धान एंव खोजका कार्यहरुलाई विभागले निरन्तरता दिंई रहेको छ ।

राष्ट्रभित्र छरिएर रहेका सम्पदाहरुको प्रारम्भिक सर्भेक्षण प्रतिवेदन प्रकाशित गरिसकेका छौं । यस कार्यले सम्पदाहरुको सूचीकरण गरी प्राथमिकताका आधारमा धार्मिक तथा सांस्कृतिक महत्वलाई दृष्टिगत गरी उपत्यका वाहिरको सम्पदाहरुको संरक्षण गर्ने कार्यक्रमहरुमा सघाउ पुगेको छ । ४० को दशकसम्म सम्पदा स्थलको मूल थलो उपत्यकामा मात्र रहेकोमा उल्लेखित सूची प्रकाशनले उपत्यका वाहिर पनि महत्वपूर्ण धार्मिक स्थलहरु र सम्पदाहरु उपस्थिति प्राचीन काल देखिनै रहेको विषयलाई प्रमाणित गर्दछ ।

नेपालको पश्चिम क्षेत्रमा प्राप्त सांस्कृतिक सम्पदा एंव लोक संस्कृतिहरुको संरक्षण र सम्वर्द्धन गर्नु पनि उत्तिकै आवश्यकता रहेका छन् । यी वृहत संरक्षण र सम्वर्द्धन कार्यका लागि यस विभागलाई प्राप्त हुने न्यून आर्थिक सुविधावाट सम्पन्न गर्न अप्ठेरो परिस्थिति रहेको छ । विभागको दायित्व र कार्यक्षेत्रलाई हृदयंगम गरी यसले गर्नु पर्ने कार्यक्रमहरुलाई प्राथमिकताका साथ अग्रगामी सोच एंव क्रियाकलापहरु संचालन गर्नु पर्ने देखिन्छ । अपितु यस विभागले आशा गरेभन्दा वढी प्रतिफल जन समक्ष पुऱ्याउन सफलता हासिल गरिसकेको छ ।

बिभागले पचहत्तरै जिल्लामा रहेका स्मारकहरुका, पुरातात्विक तथा ऐतिहासिक स्थलहरु खोज तथा अनुसन्धान एवं संरक्षण र सम्वर्द्धन लगायत बिश्व सम्पदा क्षेत्रको सुव्यबस्थापन गर्ने र क्षेत्रीय संग्रहालयहरु, राष्ट्रिय अभिलेखालय तथा सांस्कृतिक सम्पदा संरक्षण प्रयोगशालाको बिकासका लागि आवश्यक व्यबस्था गरिएको छ ।

| आ.ब | राष्ट्रिय विकास बजेट (रू. हजारमा) | पुरातत्व विकासको विकासबजेट (रू. हजारमा) | राष्ट्रिय विकास बजेटमा पुरातत्व बिभागको विकास बजेटको अनुपात |
|---|---|---|---|
| २०५८/०५९ | ५,०४,७०,२७८ | ४९,५०० | ०.०००९८ |
| २०५९/०६० | २९,०३,००,०० | ३३,२१२ | ०.००१ |
| २०६०/०६१ | ३२,८१,००,०० | ३४,५०० | ०.००१ |

बिभागबाट संचालित विभिन्न बिकास आयोजना परियोजनाहरु मार्फत प्रत्येक वर्ष विनियोजित गरेको रकमबाट विभिन्न जिल्लाहरुमा गरिएका संरक्षण सम्वर्द्धन उत्खनन् तथा विकासका कामहरु बारे सवैमा जानकारी गराउन यस बिभागले आफ्नो मुखपत्र प्राचीन नेपालमा एक आर्थिक वर्ष भित्र भए गरेको कामहरुको विवरण प्रकाशन गर्दै लैजाने नीति अनुरुप यस अंकमा आर्थिक वर्ष २०५९/०६० को विकास कार्यक्रमहरुको कार्य प्रगतीको संक्षिप्त विवरण प्रस्तुत गरिएको छ।

### पुरातात्विक स्थल संरक्षण तथा सुधार आयोजना :

यस आयोजना अर्न्तगत पूर्व मेची देखि पश्चिम महाकाली सम्मका स्मारकहरुको सूचीकरण, तिनको संरक्षण र सम्वर्द्धन गरी ऐतिहासिक एवं पुरातात्विक महत्वलाई जगेर्ना गर्नु लगायत पुरातात्विक स्थलको खोज अनुसन्धान एवं उत्खनन् प्रतिवेदन तयार गर्ने कार्यहरु पर्दछन। कार्यक्षेत्रको व्यापकतालाई दृष्टिगत गर्दा उल्लेखित कार्यहरुका लागि बजेट न्यून रहेको छ। हालसम्म गरिएका अनुसन्धान बाट प्राप्त बिवरणहरुका आधारमा सूचीकरण भै सकेका राष्ट्रका सम्पदाहरुको बाहुल्यता लाई मध्यनजर गर्दा उपलब्ध बजेटलाई अधिकतम सदुपयोग गरी प्रतिफल प्राप्त गर्न सम्पदाहरु प्रति जनचासो अभिवृद्धि गर्न जन सहभागितामूलक कार्यक्रमहरु संचालन गर्नमा बिशेष प्रयास भईरहेको छ। फलस्वरुप यस क्षेत्रमा बिगत केही बर्ष देखि बिभिन्न निकायहरु महानगरपालिका, नगरपालिका, वडा कार्यालय स्थानीय निकायहरु, निजी गुठी एवं सरोकारवालाहरुबाट पनि उल्लेखनीय लगानी हुन थालेको छ। यस प्रकारको संलग्नताले सम्पदाको संरक्षण कार्यमा महत्वपूर्ण सहयोग हुने विश्वास गरिन्छ।

## पुरातत्वको गतिविधि

### १. पुरातात्विक स्थल संरक्षण सुधार आयोजना कार्य विवरण

| क्र.सं. | कार्य विवरण | वार्षिक वजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| | **(क) पूर्वाञ्चल** | | | | |
| १. | धनकुटा जिल्ला स्थित क्षेत्रीय संग्रहालय धनकुटाको कार्यालय भवन निर्माण | ११४२ | १०० % | १०० % | |
| २. | झापा जिल्लाको किचकवध उत्खनन् कार्य | २५० | १०० % | १०० % | अनुदान दिइएको |
| ३. | उदयपुर चौदण्डी गढीलाई तारवारले घेर्ने | १०८ | १०० % | १०० % | |
| | **(ख) मध्यमाञ्चल** | | | | |
| १. | सांस्कृतिक महत्व प्रकाश पार्न भित्तेपात्रो प्रकाश (१००० प्रति) | १२५ | १०० % | १०० % | |
| २. | सांस्कृतिक सम्पदा जीर्णोद्धार सम्वन्धि फोटोग्राफिक रेकर्ड गर्ने | १५० | १०० % | १०० % | |
| ३. | राष्ट्रिय अभिलेखालयको स्ट्यागहलमा राखिएका हस्तलिखित ग्रन्थ र अभिलेखहरू २७ प्रतिशत संरक्षण गर्ने | १०० | १०० % | १०० % | |
| ४. | रा.अ. आयुर्वेदिक सूचीपत्र प्रकाशित गर्ने | १०० | १०० % | १०० % | |
| ५. | रा.अ. को शौचालय सुधार कार्य | ५० | १०० % | १०० % | |
| ६. | कुमारीचोक स्थित ऐतिहासिक कागजपत्र अभिलेखालय भवनमा ल्याई संरक्षण गर्ने | २०० | १०० % | १०० % | |
| ७. | कीर्तिपुर वाघभैरव मन्दिरको भित्तेचित्र संरक्षण कार्य | ८० | १०० % | १०० % | |
| ८. | भक्तपुर स्थित तलेजु मन्दिरको चोकको १७ औं शताव्दीको भित्तेचित्र संरक्षण कार्य | १५० | १०० % | १०० % | |
| ९. | राष्ट्रिय मुद्रा संग्रहालयमा मुद्रा खरिद कार्य | ५० | १०० % | १०० % | |
| १०. | राष्ट्रिय संग्रहालयको लागि कम्प्यूटर १ वटा खरिद कार्य | १०० | १०० % | १०० % | |
| | शौचालय सुधार, | १५० | १०० % | १०० % | |
| | ढल व्यवस्थापन तथा पर्खाल निर्माण | ११३७ | १०० % | १०० % | |
| ११. | तीन वटै क्षे.सं. को विकास तथा सुदृढीकरण का लागि विस्तृत अध्ययन सर्भेक्षण तथा दीर्घकालीन योजना तयार गर्ने | २०० | १०० % | १०० % | |

| क्र.सं. | कार्य विवरण | वार्षिक वजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १२. | तीनैवटा संग्रहालयको लेवल क्याप्सन सहित फोटो फोटोग्राफी रेकर्ड राख्ने | १०० | १०० % | १०० % | |
| १३. | कला संग्रहालय धातुकला, काष्ठकला संग्रहालयको शौचालय तथा पानी व्यवस्था गर्ने | ३०० | १०० % | १०० % | |
| १४. | कला संग्रहालयमा भएका अग्निशमन सिलिण्डर भर्ने र पर्दा खरिद गर्ने | १०० | १०० % | १०० % | |
| १५. | विभागको गतिविधि सहित ३ अंक प्राचीन नेपाल र २ वटा सांस्कृतिक क्षेत्रको सर्वेक्षण लगत प्रतिवेदन प्रकाशित गर्ने | २५० | १०० % | १०० % | |
| १६. | रा.अ. को पछाडि रहेको स्त्यागहलको छाना माथि सेड राखी संरक्षण गर्ने । | १२२१ | १०० % | १०० % | |
| १७. | काठमाडौं जिल्ला नक्साल भगवान वहालको चैत्य जीर्णोद्धार कार्य | १०० | १०० % | १०० % | |
| १८. | काठमाडौं स्थित जैसीदेवल मन्दिरको जीर्णोद्धार कार्य ५० प्रतिशत गर्ने | १००० | १०० % | १०० % | |
| १९. | का.म.न.पा. ज्ञानेश्वर स्थित नानक मठ जीर्णोद्धार | ५०० | १०० % | १०० % | |
| २०. | मैतीदेवी मन्दिर जीर्णोद्धार कार्य पूरा गर्ने | १८० | १०० % | १०० % | |
| २१. | ल.पु. ठेचो स्थित वाल कुमारी मन्दिर सत्तल जीर्णोद्धार कार्य | १००० | १०० % | १०० % | |
| २२ | वनारस स्थित साम्राज्येश्वर मन्दिरको वृद्धाश्रमको वांकी मर्मत कार्य पुरा गर्ने | ३०० | १०० % | १०० % | |
| २३. | नुवाकोट गारतघर भूई तथा भित्री गाह्रो जीर्णोद्धार कार्य | ४०० | १०० % | १०० % | |
| २४ | चितवन स्थित वागीश्वरी मन्दिर जीर्णोद्धार | १८६ | १०० % | १०० % | |
| २५. | भक्तपुर जिल्ला स्मारक कार्यालयको अनुशरण कार्यक्रम | १०० | १०० % | १०० % | |
| २६. | ल.पु. अशोक चैत्य को वांकी कार्य सम्पन्न गर्ने | १५० | १०० % | १०० % | |
| २७. | भक्तपुर मध्यपुर ठिमीको प्रवेशद्धारको वांकी कार्य पुरा गर्ने | ४०० | १०० % | १०० % | |
| | **पश्चिमाञ्चल** | | | | |
| १. | नवलपरासी जिल्ला स्थित रामग्राम स्तुपको उत्खनन् कार्य पुरा गर्ने | ५०० | १०० % | १०० % | |
| २. | स्याञ्जा गोरुजुरे मन्दिर संरक्षण | १०० | १०० % | १०० % | |
| ३.. | पोखरा संग्रहालयको वातावरण सुधार कार्य | १०० | १०० % | १०० % | |
| ४. | कपिलवस्तु संग्रहालयको १२० मि. पर्खाल निर्माण गर्ने | ७०० | १०० % | १०० % | |
| ५. | कपिलवस्तु संग्रहालयमा वाइरिगं सुधार गर्ने | ५० | १०० % | १०० % | |
| ६. | गोरखा जिल्ला रामशाह घाटको पाटी निर्माण | २०० | १०० % | १०० % | |
| | **मध्य तथा सुदुर पश्चिमाञ्चल** | | | | |
| १. | सुर्खेत संग्रहालयको मर्मत संभार कार्य | २५ | १०० % | १०० % | |
| २. | सुर्खेत स्थित काकेविहारको ६० प्रतिशत कार्य सम्पन्न गर्ने | १७३७ | १०० % | १०० % | |
| ३. | वडीमालिका स्थित नाटेश्वरी मन्दिर जीर्णोद्धार | १०० | १०० % | १०० % | अनुदान दिइएको |

पुरातात्विक स्थल संरक्षण तथा सुधार आयोजनामा अधिराज्य भरि रहेका स्मारकहरूको अपर्भट आइपर्ने आपतकालीन तथा जन सहभागिता गर्ने कार्यको एक मूष्ट रकममा व्यवस्था गरिएको थियो । उक्त रकमवाट आ.व. ०५९।६० मा निम्न स्मारकहरूको संरक्षण तथा उल्लेखित अन्य कार्यहरू गरिएको थियो ।

| क्र.सं. | आपतकालीन संरक्षण कार्यहरु | वार्षिक वजेट | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | का.म.न.पा. भीमभक्तेश्वर मन्दिर जीर्णोद्धार कार्यको वांकी रकम भुक्तानी दिने कार्य | २०० | १०० % | १०० % | |
| २ | लमजुङ्ग दरवारमा विद्युत सुदृढीकरण कार्य | ५९ | १०० % | १०० % | |
| ३. | धन्दो चैत्य संरक्षण कार्य | १० | १०० % | १०० % | |
| ४. | धन्दो चैत्यको रसायन संरक्षण कार्य | १६ | १०० % | १०० % | |
| ५. | राष्ट्रिय अभिलेखालय भवन को स्टोर मर्मत कार्य | ३०० | १०० % | १०० % | |
| ६. | कार्तिक नाच | ४२ | १०० % | १०० % | |
| ७. | मध्यपुर थि.न.पा. को प्रवेश निर्माण कार्य | ४०० | १०० % | १०० % | |
| ८. | श्री ५ महाराज धिराज सरकारको सुदूर पश्चिमाञ्चल भ्रमणको शिलशिलामा डोटी को शैलेश्वरी तथा धनगढीको नैनादेवी मन्दिर मर्मत तथा वातावरण सुधारका लागि सम्बन्धित जिल्ला प्रशासन कार्यालय लाई रकम उपलब्ध गराउने कार्य | ५० | १०० % | १०० % | |
| ९. | गारतघरको भूई तथा भित्ता मर्मत कार्यको लागि नपुग रकम दिने कार्य रा.अ. भवनमा रहेको रसायन छाना मर्मत कार्य | ७३ | १०० % | १०० % | |
| १०. | सालवसाली परम्परागत नाचलाई दिने अनुदान रकम नपुग भई आपतकालीन वाट दिइएको | १३ | १०० % | १०० % | |
| ११. | गोकर्णेश्वर महादेव मन्दिर परिसरमा रहेको विभिन्न स्मारकहरूको छाना | ५ | १०० % | १०० % | |
| १२. | संरक्षण कार्य | ९३ | १०० % | १०० % | |
| १३. | सप्तरी जिल्ला छिन्नमस्ता मन्दिरको वातावरण सुधार कार्य | ३५ | १०० % | १०० % | |
| १४. | राष्ट्रिय सग्रहालय छाउनीमा चोरी मूर्ति प्रदर्शनी | ८ | १०० % | १०० % | |

विश्वव्यापी महत्वको अद्धितीय वास्तुकलाका वेजोड नमुनाहरु विश्वका साझा सम्पदाका रुपमा रहने युनेस्कोको नीति अनुरुप हालसम्म नेपालको काठमाडौं उपत्यकाका विश्व सम्पदा क्षेत्रहरुमा चांगुनारायण क्षेत्र, बौद्ध क्षेत्र, स्वयम्भु क्षेत्र, हनुमानढोका दरबार क्षेत्र, पाटन दरबार क्षेत्र र भक्तपुर दरवार क्षेत्र र पशुपतिनाथ क्षेत्र, विश्व सम्पदा क्षेत्रमा समावेश छन । त्यस्तै गरी लुम्विनी क्षेत्र पनि सो सुचीमा सुचीकृत भएको छ । विश्व संम्पदा सूचीमा समावेश क्षेत्रहरुको विशेष संरक्षण र व्यवस्थापनका लागि एक विशेष विश्व सम्पदा संरक्षण योजना संचालन भई आएको छ ।

यस आयोजना अन्तर्गत आव २०५९/०६० मा विभिन्न कार्यहरु भएका थिए । जसमध्ये ५५ झयाले दरवारको जीर्णोद्धार सम्बन्धी कार्य आरम्भ गरिएको छ । विश्व संम्पदा क्षेत्रमा परेका संरक्षित स्मारक क्षेत्रका स्मारकहरुको वर्गीकरण गर्ने कार्य सम्पन्न भइसकेको छ । साथै पाटन दरवारको दक्षिण लङ संरक्षण एवं निजी घरहरुको मौलिकता कायम गर्ने कार्यहरु भएका छन ।

**विश्व सम्पदा संरक्षण योजना**

यस आयोजना अन्तर्गत काठमाडौं उपत्यका भित्रको विश्व सम्पदा सूचीमा परेका संरक्षित स्मारक क्षेत्र भित्र रहेका (हनुमानढोका, ललितपुर, भक्तपुर दरवार क्षेत्रहरू, स्वयम्भू, चांगु र वौद्ध) स्मारकहरूको संरक्षण, सम्वर्द्धन तथा वातावरण सुधार कार्यहरू निम्नानुसार रहेको छ ।

| क्र.सं. | आपतकालीन संरक्षण कार्यहरु | वार्षिक वजेट | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | का.म.न.पा. भीमभक्तेश्वर मन्दिर जीर्णोद्धार कार्यको वांकी रकम भुक्तानी दिने कार्य | २०० | १००% | १०० % | |
| २ | लमजुङ्ग दरवारमा विद्युत सुदृढीकरण कार्य | ५९ | १००% | १०० % | |
| ३. | धन्दो चैत्य संरक्षण कार्य | १० | १००% | १०० % | |
| ४. | धन्दो चैत्यको रसायन संरक्षण कार्य | १६ | १०० % | १०० % | |
| ५. | राष्ट्रिय अभिलेखालय भवन को स्टोर मर्मत कार्य | ३०० | १००% | १०० % | |
| ६. | कार्तिक नाच | ४२ | १००% | १०० % | |
| ७. | मध्यपुर थि.न.पा. को प्रवेश निर्माण कार्य | ४०० | १००% | १०० % | |
| ८. | श्री ५ महाराज धिराज सरकारको सुदूर पश्चिमाञ्चल भ्रमणको शिलशिलामा डोटी को शैलेश्वरी तथा धनगढीको नैनादेवी मन्दिर मर्मत तथा वातावरण सुधारका लागि सम्बन्धित जिल्ला प्रशासन कार्यालय लाई रकम उपलब्ध गराउने कार्य | ५० | १००% | १०० % | |
| ९. | गारतघरको भूई तथा भित्ता मर्मत कार्यको लागि नपुग रकम दिने कार्य रा.अ. भवनमा रहेको रसायन छाना मर्मत कार्य | ७३ | १०० % | १०० % | |
| १०. | सालवसाली परम्परागत नाचलाई दिने अनुदान रकम नपुग भई आपतकालीन वाट दिइएको | १३ | १०० % | १०० % | |
| ११. | गोकर्णेश्वर महादेव मन्दिर परिसरमा रहेको विभिन्न स्मारकहरूको छाना | ५ | १००% | १०० % | |
| १२. | संरक्षण कार्य | ९३ | १००% | १०० % | |
| १३. | सप्तरी जिल्ला छिन्नमस्ता मन्दिरको वातावरण सुधार कार्य | ३५ | १०० % | १०० % | |
| १४. | राष्ट्रिय संग्रहालय छाउनीमा चोरी मूर्ति प्रदर्शनी | ८ | १०० % | १०० % | |

विश्वव्यापी महत्वको अद्धितीय वास्तुकलाका वेजोड नमुनाहरु विश्वका साझा सम्पदाका रुपमा रहने युनेस्कोको नीति अनुरुप हालसम्म नेपालको काठमाडौं उपत्यकाका विश्व सम्पदा क्षेत्रहरुमा चांगुनारायण क्षेत्र, बौद्ध क्षेत्र, स्वयम्भु क्षेत्र, हनुमानढोका दरबार क्षेत्र, पाटन दरबार क्षेत्र र भक्तपुर दरवार क्षेत्र र पशुपतिनाथ क्षेत्र, विश्व सम्पदा क्षेत्रमा समावेश छन । त्यस्तै गरी लुम्विनी क्षेत्र पनि सो सुचीमा सुचीकृत भएको छ । विश्व संम्पदा सूचीमा समावेश क्षेत्रहरुको विशेष संरक्षण र व्यवस्थापनका लागि एक विशेष विश्व सम्पदा संरक्षण योजना संचालन भई आएको छ ।

यस आयोजना अन्तर्गत आव २०५९/०६० मा विभिन्न कार्यहरु भएका थिए । जसमध्ये ५५ झयाले दरवारको जीर्णोद्धार सम्बन्धी कार्य आरम्भ गरिएको छ । विश्व संम्पदा क्षेत्रमा परेका संरक्षित स्मारक क्षेत्रका स्मारकहरुको वर्गीकरण गर्ने कार्य सम्पन्न भइसकेको छ । साथै पाटन दरवारको दक्षिण लङ संरक्षण एवं निजी घरहरुको मौलिकता कायम गर्ने कार्यहरु भएका छन ।

**विश्व सम्पदा संरक्षण योजना**

यस आयोजना अन्तर्गत काठमाडौं उपत्यका भित्रको विश्व सम्पदा सूचीमा परेका संरक्षित स्मारक क्षेत्र भित्र रहेका (हनुमानढोका, ललितपुर, भक्तपुर दरवार क्षेत्रहरू, स्वयम्भू, चांगु र वौद्ध) स्मारकहरूको संरक्षण, सम्वर्द्धन तथा वातावरण सुधार कार्यहरू निम्नानुसार रहेको छ ।

| क्र.सं. | कामको विवरण | वार्षिक वजेट रू. हजारमा- | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | विश्व सम्पदा क्षेत्रको व्यवस्थापन सुदृढीकरण गर्ने | २०० | १०० % | १०० % | |
| २. | प्रचार प्रसार कार्यक्रम | १०० | १०० % | १०० % | |
| ३. | चांगुको सिढी मर्मत संभार कार्य | ३०० | १०० % | १०० % | |
| ४. | संरक्षण क्षेत्रका घरधनीलाई सुविधा प्रदान गर्ने | १०० | १०० % | १०० % | |
| ५. | विश्व सम्पदा क्षेत्रका स्मारकहरूको वर्गीकरण गरी विवरण प्रकाशित गर्ने | ३५० | १०० % | १०० % | |
| ६. | महाविष्णु मन्दिर जीर्णोद्धार कार्य सम्पन्न गर्ने | १२१२ | १०० % | १०० % | |
| ७. | पाटन दरवारको दक्षिणलङ (पहिले अदालत वसेको भाग) जीर्णोद्धार गर्ने | १२०० | १०० % | १०० % | |
| ८. | चांगुनारायण मन्दिरको छाना जीर्णोद्धार कार्य पुरा गर्ने | १३०० | १०० % | १०० % | |
| | भ.पु. को ठूलो घण्टाको छानाको पाता मर्मत कार्य | | | | ५५ वुंदे सुझावको प्रगति प्रतिवेदन र Periodic Reports पठाई सकेको संशोधित कार्यक्रम अनुसार ढुंगेधारा जीर्णोद्धार सम्पन्न |
| ९. | ५५ झ्याले दरवार जीर्णोद्धार गर्ने | २०० | १०० % | १०० % | |
| १०. | स्वयम्भू वसपार्कमा क्यूरियो पसल वनाउन रिटेनिगं वाल लगाउने | १५००<br>४५० | १०० %<br>१०० % | १०० %<br>१०० % | |
| ११. | विश्वसम्पदाहरूको संरक्षण सम्बन्धी प्रगति प्रतिवेदन तयार गर्ने र समय समयमा यूनेस्कोमा पठाउने | १०० | १०० % | १०० % | |
| १२. | वौद्ध क्षेत्रमा गुरुयोजना अनुसारको पेमेन्ट कार्य | ३४९ | १०० % | १०० % | |
| १३. | आपतकालीन संरक्षण कार्य | २०० | १०० % | १०० % | |

## गोरखा दरवार क्षेत्र संरक्षण परियोजना

यस परियोजना अन्तर्गत गोरखाका माथिल्लो तथा तल्लो दरवार क्षेत्र र त्यसको परिसरमा रहेका स्मारकहरूको संरक्षण प्रतिमा स्थलको सुधार तथा विकास आदि कार्यहरू छन् । यस परियोजनामा भएको कार्यहरू निम्नानुसारका छन् ।

| क्र. सं. | कामको विवरण | बार्षिक वजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | पृथ्वी पार्कमा लगाइएको फूल विरुवा स्याहार गर्ने | ३०० | १०० % | १०० % | सालवसाली कार्य |
| २. | अनुशरण कार्य | २५० | १०० % | १०० % | |
| ३. | संग्रहालय विकास | १०५० | १०० % | १०० % | |
| (क) | ऐतिहासिक नक्सा तयार गर्ने | | | | |
| (ख) | गोरखाका नौ राजाहरूको तैलचित्र वनाउने | | | | |
| (ग) | रिसेप्सन डेक्स र क्लकरुम वनाउने | | | | |
| ४. | पृथ्वीपार्क पूर्वी दक्षिण भागको वांकी कार्य | १५८६ | १०० % | १०० % | |
| (क) | वंशावली डवली निर्माण कार्य | | | | |
| (ख) | पिकनिक(सेड) निर्माण गर्ने २ वटा | | | | |
| (ग) | ढल वनाउने सुखा गारो लगाउने र वोट विरुवा दुवो लगाउने | | | | |
| (घ) | दुवो र वोट लगाउने | | | | |
| ५. | कालीवनको तारवार मर्मत संभार कार्य पूरा गर्ने | ८०० | १०० % | १०० % | |

## धार्मिक नाच तथा जात्रा पर्व

विभिन नाच तथा जात्राहरूलाई आ.व. ०५९।६० मा यस विभागवाट दिइएको आर्थिक अनुदानको विवरण

| क्र.सं | नाच तथा जात्रा | नाईके | अनुदान रकम |
|---|---|---|---|
| १. | महाकाली नाच (भ.पु.) | सुनिलराज दैवज्ञ | १०६४८।- |
| २. | ,, ,, | रामचन्द्र खर्वुजा | ७९८६।- |
| ३. | ,, ,, | लक्ष्मीभक्त मूस्याचुं | ७९८६।- |
| ४. | ,, ,, | रत्नलाल डण्डेख्या | ७९८६।- |
| ५. | ,, ,, | रामलाल लोहला | ७९८६।- |
| ६. | ,, ,, | दान वहादुर फैजु | ७९८६।- |
| ७. | रामचन्द्र नाच (भ.पु.) | रत्नलाल डडेख्या | ७९८६।- |
| ८. | दशअवतार नाच, त्रिपुरेश्वर | दिपक श्रेष्ठ | ११९७९।- |
| ९. | सवभक्कु नाच (हल्चोक) | माइला पुतुवार | ६६५५।- |
| १०. | माघ जात्रा (वटुटोल) | शाालिग्राम तण्डुकार (वडासदस्य) | ५३२४।- |
| ११. | हात्ती नाच (किलागल) | तुलसी नारायण महर्जन | ३३२७।५० |
| १२. | गाउने ढाडी (यटखा) | सूर्यमान महर्जन | १९९६।- |
| १३. | कार्तिक नाच (ल.पु.) | हरिमान श्रेष्ठ(व्यवस्थापक) | ४१२६१।- |
| १४. | अष्टमातृका नाच (ल.पु.) | भाजुरत्न शाक्य(वडाअध्यक्ष) | ३०२५०।- |
| १५. | लाखेनाच (मजिपाट) | लक्ष्मणराम रंजित | ६६५५।- |
| १६. | भीमसेन खट जात्रा | मंगलटोल सुधार संघ | ३६३०।- |
| १७. | कृष्ण पूजा (ल.पु.) | कृष्णपूजा संचालन समिति | ३६३०।- |
| १८. | न्यकुमतया जात्रा (ल.पु.) | न्यकुमतया जात्रा व्यवस्था समिति | १८१५०।- |
| १९. | कार्तिक नाच , फर्पिगं | नारायण वलामी | १०५००।- |
| २०. | निरञ्जना भगवती पूजा(नुवाकोट) | परशुराम पाध्या -(पुजारी)हाल वासुदेव कंडुवाल | ६०००।- |

## ०५८/६० मा प्राविधिक सहयोग उपलब्ध गराइएको

१. दक्षिणकाली गा.वि.स. वडा नं. ५ स्थित गोपालेश्वर मन्दिर प्राविधिक वाट स्थलगत निरीक्षण गरी प्रतिवेदन तयार गरी श्री गुठी संस्थानलाई पुरातात्विक प्रतिवेदन, ल.ई. तथा नक्सा पठाइएको छ।

२. विष्णुदेवी मन्दिर सुधार समितिले तीनथाना गा.वि.स. वडा नं. १ स्थित विष्णुदेवी क्षेत्रको संरक्षण सम्वन्धि पुरातात्विक प्रतिवेदन तयार पारिएको ।

३. सुनसरी जिल्ला धरान स्थित विजयपुर धार्मिक मठ मन्दिर स्थलहरू भएको स्थानहरू मध्ये विजयपुरको दुई धारे छेउमा उत्खनन् गर्दा विभिन्न आकृतिका शिलाहरू भेटिएको जानकारी प्राप्त हुन आएकोले सो क्षेत्रका प्राविधिक खटाई स्थलगत निरीक्षण पश्चात पुरातात्विक प्रतिवेदन तयार पारिएको ।

४. वज्रयोगिनी सेवा समिति, सांखुको मूर्ति फेला परेको भनी पत्र प्राप्त भएकोले सो स्थलमा प्राविधिक खटाई प्रतिवेदन तयार पारिएको ।

५. काठमाडौं महानगरपालिका वडा नं. १२ टेकु भंसार स्थित ऋषेश्वर महादेव मन्दिर परिसर सुधार गर्न पत्र प्राप्त हुन आएकोले सो स्थलको स्थलगत निरीक्षण गरी प्रतिवेदन तयार पारिएको ।

६. पुरातत्व विभागले श्री संस्कृति, पर्यटन तथा नागरिक उडड्यन मन्त्रालयको विकास कार्यक्रममा समावेश निम्न स्मारकहरू यस विभागको प्राविधिक रेखदेखमा सम्पन्न भएको थियो ।

(क) शंखमूल स्थित मृत्युञ्जय महादेव मन्दिर जीर्णोद्धार कार्य

(ख) त्रिपुरेश्वर महादेव मन्दिरको सत्तल जीर्णोद्धार कार्य